दिव्य गुरु महोत्सव

श्री शिव गोरक्ष हवन

तान्त्रोक्त बटुक भैरव हवन

तान्त्रोक्त महालक्ष्मी हवन

तान्त्रोक्त बगलामुखी हवन

तान्त्रोक्त गणपति हवन

# जानकारी

*सिद्धाश्रम शक्ति केन्द्र नेपालको प्रचलित कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ। परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो। आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ। यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ। यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत् सोझै निर्देशित छन्। यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राणप्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ। त्यसैले एक स्वतन्त्र र आफैँमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ, जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन्। त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो। प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ। विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिकनो सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ। यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ। साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ।*

*सिद्धाश्रम शक्ति केन्द्रबाट प्रकाशित 'गोरक्ष निखिल वाणी' नेपालकै पहिलो आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक पत्रिका हो। सद्गुरुदेवहरूको आशीर्वादस्वरूप यस पत्रिका २०५६ साल भाद्र महिनादेखि अनवरत रूपमा प्रकाशित भइरहेको छ। काठमाडौँ जिल्ला प्रशासन कार्यालयमा दर्ता भएको यस पत्रिकाको दर्ता नं. ७०/०५६ हो। यो पत्रिका धर्मको नाममा हुने गरेको शोषण, आडम्बर एवं पाखण्डविरुद्ध आवाज उठाउँदै वास्तविक तथ्यलाई जनसमक्ष उजागर गरी आध्यात्मिक जागरणको वातावरण बनाउने कार्यमा सरिक हुँदै आएको छ। प्रकाशनको शुभारम्भदेखि नै अलग्गै पहिचान एवं अस्तित्व बनाउन सफल यस पत्रिकाले मंत्र, तंत्र, योग, आयुर्वेद, सम्मोहन, ध्यान, वेद, पुराण, उपनिषद् आदिजस्ता ऋषिमुनिहरुद्वारा प्रतिपादित तथ्यहरूको व्यवहारिक एवं वैज्ञानिक पक्षहरूलाई प्रस्तुत गर्दै आइरहेको छ। पत्रिका स्वदेश एवं विदेशमा समेत आफ्ना लाखौँ पाठक एवं प्रशंसकहरूमाझ लोकप्रिय हुँदै गइरहेको छ। वेबसाइटमार्फत् पढ्न पाइने व्यवस्थाले विश्वभर छरिएका लाखौँ नेपालीहरूमाझ पनि प्रिय छ।*

*पत्रिकामा प्रकाशित लेख, रचना, विज्ञापन, चित्रादिमा सम्पादक वा प्रकाशकको सहमति हुनु आवश्यक नरहेको पनि जानकारी गराइन्छ।*

## यसभित्र




पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा प्रकाशित***
मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-
**पत्रिकाको कार्यालय**
बसुन्धरा, काठमाडौँ, पो.ब.नं. १०५११, २७६०
फोन: ०१-४३८९१५४,
URL: gnv.org.np, ´ail: info@gnv.org.np

पत्रिकासम्बन्धी कुनै पनि जानकारीका लागि पत्रिका व्यवस्थापक मधुबहादुर कार्की, मो. ९८४१३१५८६५ सित सम्पर्क राख्न सक्नुहुनेछ।

**प्रकाशकको ठेगाना**
**सिद्धाश्रम शक्ति केन्द्र**
बसुन्धरा, काठमाडौँ
पो.ब.नं.१०५११, २७६०,
फोन: ४३८९१५४, २१००१५३
ssk.org.np, info@ssk.org.np

**मुद्रण**
भेराइटी प्रिन्टर्स प्रा.लि.
कुलेश्वर, काठमाडौँ।

# आफ्नै कुरा

मानवजीवन प्राप्तिसँगै प्रत्येक मानवले आफ्ना अगाडिका जन्महरु बिर्सने गर्दछन्, जीवनका उद्देश्यहरु, लक्ष्यहरु भुल्दछन्, जीवन के का लागि प्राप्त भयो भन्ने नै भुल्दछन् । जीवनमा सत्यको बोध हुनु आफैमा उत्कृष्ट जीवनमा गनिन्छ । जीवनलाई आजभोलि अरुसँग तुलना गरिन्छ, समाजका मानिसहरुले जसरी जीवन व्यतीत गरे हामीले पनि त्यस्तै जीवन व्यतीत गर्नुपर्छ भन्ने भावनाले जरो गाडेको पाइन्छ । भौतिकतामा कसले कति धन आर्जन गरे, डाक्टर बने वा इन्जिनियर, नेता वा अभिनेता, व्यापारी वा जागिरे यस्तै यस्तैको तुलना मात्र समाजमा देख्न पाइन्छ र बच्चैदेखि यस्तै मानसिकताले जरो गाडेको पाइन्छ । जीवनको वास्तविक लक्ष्य खोज्छु, जीवनको वास्तविक रहस्य खोतल्छु, जीवनलाई पूर्णतामा लैजान्छु भन्ने सोच, विचार, चिन्तन राख्नेहरु खोज्न दुर्लभ छ, भेट्न गाह्रो छ । समाजमा त केवल बाहिरी रुपमा उसले यस्तो गर्‍यो, फलानाले पनि कमायो आदि यस्तै सोचमा नै, अनावश्यक प्रतिस्पर्धामा नै मानिसहरु लागिरहेको पाइन्छ । जीवनलाई कहिले बुझ्ने त ? जीवनका बारेमा कहिले सोच्ने त ? यी आदि प्रश्नहरु सायदैको मनमा उठ्लान् । हुन त आजभोलि थुप्रै गुरु, स्वामी, सन्त महापुरुषहरुले बेलैमा सोच, बुझ र अगाडि बढ, अनावश्यक कुरामा बहुमूल्य समयलाई, बहुमूल्य जीवनलाई नष्ट नगर आदि सल्लाह, ज्ञान, उपदेश दिइरहेका हुन्छन्। तैपनि हामी एकछिन बुझे जस्तो गर्छौं, अनि तत्काल बिर्सिन्छौं । धर्मगुरुहरुसँग जीवन बुझ्न होइन, जीवनका समस्या समाधान गरी बिलासी बन्न गइरहेका हुन्छौं । जीवनमा परमार्थ प्राप्ति होइन, पारिवारीक सुख प्राप्तिलाई सर्वस्व ठानी अगाडि बढेका हुन्छौं । अहिलेको समाज यस्तै छ, तपाईं हामी पनि यस्तै यस्तैमा घुमिरहेका छौं, जीवन बिताइरहेका छौं । यसैले आजैदेखि जीवनलाई पनि सोच्ने गरौं, जीवनका गूढ रहस्यहरुलाई खोतल्ने प्रक्रियामा अगाडि बढौं । तपाईंहरु सबैलाई हाम्रो पनि शुभकामना !

यसपालिको अंकलाई हामीले 'महाशिवरात्रि विशेष'को रुपमा निकाल्ने कोशिस गरेका छौं । भगवान् शिवको देहको रुपमा चिनिने नेपाल आफैंमा गौरवशाली देशको रुपमा रहँदै आएको छ । नेपालका पूर्व-पश्चिम, उत्तर-दक्षिण जतातत्तै शिव मन्दिरहरु प्रशस्त रुपमा भेट्न सकिन्छ । प्राचीनकालदेखि नै भगवान् शिवको तपोस्थल, क्रिडास्थलको रुपमा रहेको नेपाल विश्वमा हिन्दुहरुको महान् केन्द्रको रुपमा, हिन्दु राष्ट्रको रुपमा विख्यात भई रहँदै आइरहेको छ । हिन्दुहरुका आराध्यदेव भगवान् श्री पशुपतिनाथ यहाँ हुनुले पनि हिन्दुहरुका लागि नेपाल सर्वश्रेष्ठ तीर्थस्थलको रुपमा स्थापित छ । भगवान् शिवको पूजा, आराधना गरिने महाशिवरात्रि नेपालीहरुले राष्ट्रिय रुपमा मनाउँदै आएका छन् भने विश्वभरि हिन्दुलगायतले पनि महाशिवरात्रिलाई विशेष पर्वको रुपमा मनाउने गर्दछन् । महाशिवरात्रि पर्वको विशेषता, महत्त्व आदि सबै सिधै भगवान् शिवसँग जोडिने गर्दछ । यसैले यस पर्व शिवको कृपा, आशीर्वाद प्राप्त गर्ने, शिवत्व प्राप्तिको पर्व मानिन्छ । यस अंकमा हामीले यसैसँग सम्बन्धित केही विषयहरुलाई समेटेका छौं । यसबाट अवश्य यहाँहरुले फाइदा लिनु हुनेछ भन्ने आशा लिएका छौं । यस अंक निकाल्ने क्रममा हामीबाट भए गरेका कमी-कमजोरीहरुका लागि परमपूज्य सद्गुरुदेवहरुसमक्ष र यहाँहरुसमक्ष क्षमा माग्दै आवश्यक सल्लाह, सुझावको अपेक्षा राख्दछौं ।

अस्तु !

परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ

मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ । गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ । सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ । यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ । गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–

*वन्दे नारायणं देवं सद्गुरुं निखिलेश्वरं ।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो । मानवजीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ । आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...' को शंखघोष गर्दै उहाँ सन् १९३५ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो । वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो । आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यासजीवन बिताउनुभयो । त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो । संन्यासजीवनपश्चात् पुन: गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो । यसको लागि सयौं पुस्तकहरूको रचना गर्दै असङ्ख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो । यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ डा. नारायणदत्त श्रीमालीको नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्गुरु आदिको संज्ञाले विभूषित हुनुभयो । आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो । हाल सद्गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ ।

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचरम् ।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ । महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ । योगमार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो । यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ । गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ । श्रीमद्भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ । विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौं हजारौं वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ । यसबारे विभिन्न विद्वान्हरूले थुप्रै अनुसन्धान गरेका छन् । आमाको कोखबाट नभई आवश्यकताअनुसार आफै प्रकट हुनुहुने महायोगी अजर-अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ । उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नै पर्दछ । नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ । नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि । सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो । नेपालमा मात्र नभएर विश्वभर उहाँका सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन् । आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ ।

महाशिवरात्रि पर्व हामी सबैका लागि नौलो पर्व होइन । वर्षभरि आउने चार महारात्रिहरूमध्ये प्रमुख पर्वको बारेमा विभिन्न पुराणहरूमा वर्णन भएको पाइन्छ । यसअन्तर्गत लिङ्गपुराणमा महाशिवरात्रिको सम्बन्धमा स्वयं भगवान् शिवले बताउनुभएको कुरा उल्लेख छ ।

पार्वतीलाई शिवजीले र व्यासले मलाई बताउनुभएको शिवरात्रिको महिमा म तपाईंहरूलाई सुनाउँछु भन्दै नैमिषारण्य क्षेत्रमा रहने अट्ठासी हजार शौनकादि ऋषिहरूलाई सूतजीले भन्नुभयो– "कोटि सूर्यसमान तेज भएका परमेश्वर शिवजीलाई देखेर मुस्कुराउँदै पार्वती सोध्नुहुन्छ- 'हे प्रभु ! आजसम्म कसैले नजानेको उत्तम व्रत, जसबाट भुक्ति-मुक्ति दुवै मिल्छ, कृपा गरेर बताउनुहोस् ।' तब महादेव भन्नुहुन्छ– 'प्रिये ! व्रतहरूमा उत्तम, भुक्ति-मुक्ति दिने, अति गोप्य, जसलाई भन्नाले मात्र पनि मृत्युभय हट्दछ, त्यस व्रतको बारेमा भन्छु, सुन ।'

भगवान् भन्नुहुन्छ– 'माघपछिको कृष्णपक्षको चतुर्दशीलाई शिवरात्रि भनिन्छ । त्यसमा गरेको व्रत सबै यज्ञभन्दा पनि उत्तम हुन्छ । समस्त दान, तपस्या, नाना प्रकारका व्रत-तीर्थहरूले नभएको पुण्य शिवरात्रिको व्रत गर्नाले हुन्छ । यो व्रत जानी जानी वा अज्ञानले गरिए पनि मोक्ष पाइन्छ । यस व्रतका प्रभावले ती मरेकाहरू नरक त्यागेर शिवका नजिक पुगेका छन् ।'

हे प्रिये ! उहिले सीमान्त देशमा बस्ने, मासुमा हुरुक्क हुने, सधैँ शिकारमा तल्लीन रहने व्याधा थियो । कुनै समयमा फाल्गुण कृष्ण चतुर्दशीको शुभ दिनमा शिकारमा जाँदा पैसा लिनका लागि साहूहरूले उसलाई मन्दिरमा रोकेर राखे । तब देवताको दर्शन पनि भयो, पक्रिएकाले व्रतालुहरूजस्तै उसको पनि उपवास भयो । शिव-शिव पनि भनाइयो र साँझमा साहूहरूद्वारा ऊ छाडियो । त्यसपछि सारा वन, पर्वत घुम्दाघुम्दै उसको त्यो दिन बित्यो तर उसले कुनै शिकार पाएन । राति पक्कै पनि शिकार जलको छेउमा पानी पिउन आउनेछ, त्यसकारण यहीँ जागै रहेर जीवहत्या

गर्छु भन्ने सोचेर ऊ जलको नजिक लुक्यो । त्यसै झाङको बीचमा शिवजीको कल्याणकारी महालिङ्ग र बेलको वृक्ष पनि थियो । बाटो सफा गर्नका लागि बेलका पातहरू चुँडेर शिवलिङ्गमाथि फ्याँक्यो । अन्जानमै हुन गएको पूजाका र जाग्राम उपवासका प्रभावले गर्दा त्यसबेलासम्म त्यो व्याधा चार खण्डको एक खण्ड पापबाट छुटिसकेको थियो ।

कुनै शिकार नपाई बेलको झाङमै प्रथम प्रहर रात बित्यो । दोस्रो प्रहरमा पानी पिउनका लागि पेट बोकेकी, राम्री मृगिणी आइपुगी । व्याधाले उसलाई देखेर धनुमा बाण चढायो । यसै बीचमा यमराजरूपी व्याधालाई मृगिणीले देखी र आफूलाई मार्नाको कारण सोध्न लागी । तब व्याधाले आश्चर्यचकित हुँदै भन्यो– 'हे सुन्दरी ! मैले कैयन् जीवहरूलाई मारेँ तर चारखुट्टे पशुहरूको यस्तो बोली कहिल्यै सुनिनँ । तेरो बारेमा सबै भन्, तँ को होस् ?'

तब मृगिणीले भनी– 'हे श्रेष्ठ व्याधा ! पहिले म स्वर्गकी अत्यन्त राम्री अप्सरा थिएँ । हिरण्याक्ष दानव मेरो पति थियो । शंकर मेरो नाचगान सधैँ हेर्नुहुन्थ्यो, दिनहुँ म ठीक समयमा त्यहाँ पुग्थेँ । तर एकदिन त त्यस दानव पतिका साथ रहँदा समय बितेछ । त्यसपछि रुद्रले क्रोधपूर्वक श्राप दिनुभयो कि कामातुर हिरण्याक्ष्य नामको मृगकी स्वास्नी मृगिणी भएस् र बाह्र वर्षसम्म तँलाई यो श्राप लागोस् । जब परस्परमा शोक पर्ला, त्यसै शोकले श्राप समाप्त हुनेछ र महादेवको दर्शनपछि मात्र तेरो मोक्ष हुनेछ । हे व्याधा ! यस ठूलो वनमा यत्तिका वर्ष बस्ता पनि मैले शंकरको दर्शन पाएकी छैन । त्यसकारण दुःख पाएकी, पेटमा बालक भएकी, मासु बोसो घटेकी हुनाले मलाई नमार । यसै बाटोबाट अर्की मोटी मृगिणी आउनेछे, उसैलाई मार । मलाई नै मार्छौ भने म बस्ने ठाउँमा गर्भ त्यागेर (बच्चा पाएर) बन्धुहरूलाई बच्चाहरू सुम्पेर सत्य-सत्य बिहान फेरि आउनेछु भनेर नानाप्रकारको वाचा गरेपछि व्याधाले मृगिणीलाई छोडिदियो । केही समयपछि पतिलाई खोज्दै अर्की मृगिणी त्यहाँ आइपुगी । त्यसले पनि नाना प्रकारले बिहान आउने वाचा गरेपछि व्याधाले त्यस मृगिणीलाई पनि छोडिदियो । यसरी नै उसको दोस्रो प्रहर पनि गयो । तब उसले अन्जानमै बेलका पात चुँडेर फेरि भगवान्माथि चढायो । शिकारको लागि सारा दिशा चहार्दा अर्को सुन्दर मृगलाई देखी बाण छोड्न आँट्यो । त्यत्तिकैमा मृगले यमराजको रूपमा व्याधालाई देखेर अत्यन्तै पिरियो र सोच्यो मेरो मृत्यु अवश्य हुन्छ । प्राणप्यारी भार्यालाई आज यस व्याधाले माऱ्यो होला । तैपनि उसले व्याधालाई भन्यो– 'हे वीर व्याधा ! जोडा मृगिणी आएका थिए । ती कुन बाटोबाट गए ? तिमीले नै सखाप पाऱ्यौ कि ?' व्याधाले छक्क पर्दै भन्यो– 'ती दुवै त्यस बाटोबाट बिहान म कहाँ आउने किरिया हालेर गए । अब म तिमीलाई कसै गरे पनि छोड्दिन ।' यस्तो सुनेर सो मृगले भन्यो– 'हे व्याधा ! म पनि यहाँ बिहान पक्का आउनेछु तर अहिलेको लागि छोडिदेउ किनकि स्वास्नी रतिका लागि असाध्यै छटपटाएकी छ, यसैले म घरमा गएर उसको छटपटाइ हरेर मित्रहरूसँग बिदा भई आउनेछु, शङ्का नमान । तिमीलाई जसरी विश्वास लाग्छ, त्यसरी नै किरिया हाल्छु ।' व्याधा त्यसका कुराले सन्तुष्ट भयो र त्यस मृगलाई पनि छाडिदियो ।

यत्तिकैमा सूर्योदय हुन लाग्यो । अन्जानमै भए पनि रातभर जाग्राम बसी शिव पूजनको प्रभावले उर्दा ऊ तुरुन्त पापबाट मुक्त भयो । त्यत्तिकैमा पाठा लिएकी अर्की मृगिणी त्यहाँ आइपुगी । जब मृगिणीलाई देखेर व्याधाले बाण छोड्न आँटेथ्यो, त्यत्तिकैमा त्यस मृगिणीले पनि आफ्नो सबै काम मिलाएर फर्की आउने किरिया खाई । त्यस्तो कुरा सुनेर व्याधाले त्यसलाई पनि छोडिदियो ।

बिहान भएपछि व्याधा पनि त्यो तलाउ छोडेर आफ्नो

त्रि

हे मृगश्रेष्ठ ! तिमी मेरो गुरु भयौ । अब उपरान्त सत्य धर्ममा रहने भएकोले मैले शस्त्र-अस्त्र त्यागिदिएँ ।' तब मृगले भन्यो– 'म सारा लौकिक कर्म त्यागेर आएको छु, मार, चाँडै मार । हामीलाई मारेर तिमीलाई पाप हुने छैन ।' तर व्याधाले मृगलाई प्रदक्षिणा गरेर बारम्बार नमस्कार गरी क्षमा माग्यो । यसरी प्रदक्षिणा गर्दा स्वर्गमा देवताहरूले बाजा बजाई पुष्पवृष्टि गरे । तब विमानसहित देवदूतहरू त्यहाँ आइपुगे । देवदूतले भने– 'सारा प्राणीलाई नाश गर्ने हे भयंकर व्याधा ! विमानमा चढ । शिवरात्रिका प्रभावले तिम्रा पातक, अपराध सबै नाश भयो । शिवरात्रिमा तिमीद्वारा उपवास हुन गयो, रातमा जाग्राम गरियो, नजानीकन नै प्रत्येक प्रहरमा शिवजीको पूजा गरियो । यसैले गर्दा सारा पापबाट छुटेका तिमी पवित्र ठाउँ शिवलोकमा जाऊ ।' फेरि देवदूतले मृगलाई हेर्दै भने– 'हे श्रेष्ठ प्राणी मृगराज ! सत्यका प्रभावले तिमी पनि स्त्री पुत्रसहितै यस विमानमा चढेर नक्षत्रलोकमा जाऊ । तिम्रै नामले संसारमा त्यो नक्षत्र प्रख्यात् हुनेछ ।'

घरतिर गयो । घरमा बालकहरू भोकाएका थिए । मासु, अन्न केही थिएन । खानाको आशले बसिरहेका ती बालकहरू बाबु मासु नलिइकन आएको देखेर निराश भए तर व्याधा सोच्न लाग्यो–'साँचो बोल्ने ती सबै मृगहरूको कुरा ठीक हो, ती सबैलाई तुरुन्त मार्ने मेरो के गति होला ? किरिया खाएपछि ती अवश्य आउनेछन् तर अब म तिनीहरूलाई मार्ने छैन ।'

उता मृग आफ्नो घरमा पुग्यो र व्याधासँगको घटना सुनाएपछि उसका परिवारका सबैले मर्ने निश्चय गरे । घरको सबै कार्य मिलाएर मृग व्याधा कहाँ जान तयार भयो । तब उसका श्रीमती र बच्चाहरू भन्छन्- 'हे मृगश्रेष्ठ ! हामी पनि तपाईंका साथ आउनेछौं । तपाईंले कठिन अवस्थाहरूमा पनि हामीलाई रक्षा गर्नुभयो । तपाईंलाई छाडेर हामीहरूको यहाँ रहने काम छैन ।' यसरी नाना प्रकारले विलाप गरेर ती सबै स्त्रीहरूले पनि मर्ने नै निश्चय गरे । ती मृगिणीहरूको कुरा सुनेर 'म व्याधाको घरमा जाउँ कि नजाउँ भन्ने चिन्ताले मृगको हृदयमा आकुलता भयो । 'तर छोराको मृत्यु निको, पत्नी अनि आफ्नो समेत मरण निको तर सत्य नाश गर्नाले कल्प नबितेसम्म सधैँ नरकमा जानुपर्छ भन्नेजस्ता सुन्दर धर्म मृगले ह्ृदयमा ल्यायो ।' पत्नी र बालबच्चाहरूका साथ ऊ व्याधाको घरमा गयो । तब मृगले व्याधालाई भन्न थाल्यो- 'हे व्याधा ! पहिले मलाई, पछि यी स्त्रीहरूलाई मेलैसित मार । त्यसपछि यी बच्चाहरूलाई मार । ढिलो नगर, व्याधाबाट मारिँदा हामी पनि स्वर्ग पुग्नेछौं ।' त्यसपछि व्याधाले भन्यो- 'ओहो ! हे प्राणीश्रेष्ठ मृग ! जाऊ, आफ्नो घर जाऊ । मलाई अब मासुको काम छैन । जो कुरा हुनु थियो, त्यो भएरै छाड्यो । जीवहरूलाई मार्नु, थुन्नु र हकार्नु पाप हो । अब उप्रान्त म परिवारका लागि कहिल्यै पाप गर्ने छैन । मलाई धर्मोपदेश दिने

यसरी कथालाई अगाडि बढाउँदै शिवजीले पार्वतीसँग भन्नुभयो– 'देवदूतको यस्तो कुरा सुनेर व्याधासहितै त्यस विमानमा चढेर त्यो मृगलाई नक्षत्रपद प्राप्त भयो । दुई मृगिणी अगाडि पछाडि भई त्यो तीन तारा भएको मृग रहेको छ जसलाई मृगशिरा (तीनतारा, छ आँख्ले वा डण्डी-तराजु पनि) भन्दछन् । आज पनि यो नक्षत्र आकाशमा स्पष्ट देख्न सकिन्छ । ''त्यसकारण जाग्रामसहित जो मानिसहरू शिवरात्रिमा उपवास गर्दछन् र शास्त्रमा बताएअनुसार शिवरात्रिको व्रत गर्दछन्, ती सबै मुक्त हुन्छन्, यसमा कुनै संशय छैन । पाप नाश गर्न शिवरात्रिको व्रत बराबर अर्को व्रत छैन । यो शिवरात्रिको व्रत गर्नाले हजार अश्वमेध यज्ञ र सय वाजपेय गरेको फल मानिसले पाउँछ ।'

यसप्रकार यो कथा शिवजीले पार्वतीलाई, व्यासले सूतजीलाई र सूतजीले शौनकादि ऋषिहरूलाई सुनाउनुभएको प्रसङ्ग लिङ्गपुराणमा वर्णन गरिएको छ । जय गुरुदेव !

**विषय प्रवेश :** विश्वमा आजसम्मका प्राच्य र प्रतीच्य विद्वान् अनुसन्धाताहरूको अनुसन्धानबाट ४ कुरा (तथ्य सत्य) प्रमाणित भएका छन् । (१) संसारमा पाइएका धर्मग्रन्थहरूमध्ये वेद सबैभन्दा पुरानो हो । (२) वेदहरूमध्ये ऋग्वेद सबैभन्दा पुरानो हो । (३) वेद विश्वको पहिलो कविता हो । (४) वेद मूल रूपमा संस्कृत भाषामा छ एवं आजको विश्वमा देखे, सुनेका धेरै भाषा र धर्महरूको मूल स्रोत वेद हो । यसकारण पनि संसारका बुद्धिजीवीहरूको निम्ति वेद शास्त्र अत्यन्त नै आकर्षक अध्ययन सामग्री हुन गएको छ । त्यसमा पनि विशेष गरेर हिन्दुहरूको निम्ति त वेद नै ब्रह्मवाक्य हो, परब्रह्म हो, अक्षर ब्रह्म हो । समस्त धर्म दर्शन, कर्म दर्शन, जीवन दर्शन, आत्मा दर्शन अथवा 'स्वत्व'को आफ्नोपनको परिचायक सम्पूर्ण कुरा वैदिक वाङ्मयमा नै अडेको छ ।

हिन्दुहरू वेदलाई छोडेर एकछिन पनि बाँच्न सक्दैनन् । वेद विद्याबिना हिन्दुहरूको अस्तित्व नै सिद्ध हुँदैन । यसै क्रममा वेदमा पशुपतिको स्वरूप अथवा रुद्रको उपासनाबारे केही चर्चा गर्ने प्रयत्न गरिएको छ । यस लघुलेखमा विशेषत: शुक्लयजुर्वेद माध्यन्दिन शाखाबाट बढी सामग्री लिइएको छ ।

**रुद्र पदार्थ :** शुक्लयजुर्वेदमा देववाचक अग्नि शब्दपछि रुद्र शब्दको अत्यधिक प्रयोग भएको छ र रुद्र शब्दले सोज्रोदित, यद्रोदित, तद्रुद्रस्य रुद्रत्वम् अर्थात् शब्द ब्रह्मको रूपमा ध्वनित भएबाट रुद्रको सार्थकता सिद्ध (निरुक्त) भएको छ भन्ने बुझिन्छ । आकाशबाट वायु, वायुबाट शब्द प्रकट हुने गर्दछन् र शब्द ब्रह्मको आश्रय आकाश रहेको छ । अत: रुद्र भन्नाले शब्दमय ब्रह्मको नै बोध हुन्छ भन्नु स्वाभाविक हुन्छ । शतरुद्रीय होममन्त्रमा पर्ने शुक्लयजुर्वेदको १६ अध्यायको २८-४६ मन्त्रहरू हेर्दा रुद्र शब्दले भव, उग्र, शर्व, पशुपति, नीलग्रीव, शितिकण्ठ, कपर्द, वामन, व्युत्तकेश आदि नामान्तर पनि पयार्यवाचीका रूपमा रहेको देखिन्छ । संस्कृत वाङ्मय भण्डारमा रुद्रगणअन्तर्गत ११ देवता प्राप्त हुन्छन् । ११ रुद्रमध्ये वीरभद्रको नाम प्रथम स्थानमा परिगणित छ । तर यजुर्वेदमा वीरभद्रको नाम उल्लिखित छैन । अमरकोषमा बताइएका शिवका ५२ नाममध्ये वेदमा नभेटिएका नामहरूमा चन्द्रशेखर, खण्डपरशु, कपालभृत् कृशानुरेसा, स्माहर त्रिपुरान्तक, गङ्गाधर, अन्धकरिपु, श्रीकण्ठ, ऋतुध्वंशी, उमापति, अहिर्बुध्न शब्दहरू प्रमुख हुन् तर ती शब्दका भाव दिने शब्द भने वेदमा भेटिन्छन् ।

**रुद्र प्रसंग पूर्वार्ध (२०३ अध्यायहरूमा):** शुक्ल यजुर्वेदको प्राय: सबैजसोमा रुद्रको कुनै न कुनै नाम र कामको प्रसंग आएको छ तर रुद्रको वा अन्य कुनै नामधारी पशुपतिको वा शिवको पूर्णरूपको बयान भने भेटिँदैन । कतै जटाजुट त कतै धनुर्धारी, कहीं खड्गधारी कहीं कृत्तिवासा (चर्मधारी) त कतै अग्निवायु सूर्यरूपी निराकार देवताको रूपमा रुद्रको स्तुति भएको छ । शुक्लयजुर्वेदअनुसार अग्नि र शिव पर्यायका रूपमा पनि यजुर्वेद ३/२५ तथा ३/६० आदि मन्त्रमा प्रयोग भएको छ ।

वेदको अर्थ निधो गर्ने ग्रन्थ निरुक्तअनुसार महान् भगवत्ता भएको हुँदा एउटै देवता अनेक रूपमा स्तुति गरिने रुद्रलाई वा अग्निलाई नै 'अग्नि सर्वादिवता' 'एकस्यै देवस्थान्ये प्रत्यङ्गानि भवन्ति' आदि अर्थमा समेत लिइएको हुँदा सबै कुरा एक देवतावादी वैदिक सिद्धान्तमा नै समाहित हुने देखिन्छ र देवता वा धर्मका नाममा परस्पर भेदबुद्धि गर्नु अबुझकै काम हो भनिन्छ । यस प्रसङ्गमा हेर्दा यजुर्वेदका तेस्रो अध्यायको पच्चिसोमात्र (३/२५) मा अग्निलाई तपाईं शिव (कल्याणकारी) बन्नुहोस् भनिएको छ भने ३/५७ मा रुद्र र अम्बिका (पार्वती) लाई सँगै संस्तुति गर्दै भिनाजु वा ज्वाईंका रूपमा नेपालीले शिवस्तुति गरेझैं लाग्छ । त्यसै मन्त्रमा यात्राका क्रममा बाटोमा खाने खाजाका रूपमा यज्ञको उच्छिष्ट र अवशिष्ट वस्तु रुद्रलाई समर्पित गर्दै खेतबारी वा

चौबाटोमा राखिने बाली कुरुवा मूर्ति (ख्याचा) मा तराजु राखेझैं झुण्ड्याइदिने वरुण प्रधासअन्तर्गत ऋम्बकेष्टिको प्रसंग ३/६१ आउँदछ। ३/६० मन्त्रमा पुरुष र स्त्रीहरूले यज्ञरूपी रुद्रको प्रार्थना गर्दै घुमेको प्रसंग छ । जसमा स्त्री जातिले पनि वेद मन्त्र पढ्ने गरेको देखिन्छ । ३/६३ मा स्वधिति (खड्ग) लाई शिव (अहिंस्रक) हुन प्रार्थना गरिएको छ । ५/३ मा जातवेद (अग्नि) लाई शिव (कल्याणकारी) बनिदिन आग्रह गरेको पाइन्छ । ७/४७ मा वरुणले मलाई रुद्रको हातमा दिऊन् र रुद्रले मलाई प्राणदान गरी अमरता दिऊन् भनिएको छ भने ८/४६ मा विशेष प्रकारको हवि वा आवाहन चाहिने उग्र रूपका रुद्रको चर्चा छ ।

यसैगरी शुक्लयजर्वेदका नवम अध्यायको ३४ मन्त्रमा १४ अक्षरमय 'स्तुतिपद्यभागी' भएर ससम्मान प्राप्त गरेको प्रसंग छ भने सोही अध्यायको ३९ मन्त्रमा रुद्रबाट पशुप्राप्तिको प्रार्थना गरिएको छ । दशम अध्यायको १९ औँ मन्त्रमा रुद्रलाई अहिर्ब'ध्नका रूपमा साँढेमा चढेर हिमालय पर्वततर्फ प्रस्थान गर्दै वर्षा गराइदिन प्रार्थना गरिएको छ ।

१०/२० मन्त्रले रुद्रको हिंस्रक रूपलाई १०/२८ र ११/२८ ले रुद्रको सेवनीय सुन्दर शिवरूप लिएर जनताको निम्ति ११/४५ मा शिव (कल्याणकारी) बनिदिन आवाहन गरिएको ११/५४ मा ११ रुद्रहरू मिलेर धर्तीमा प्रशस्त प्रकाश भरिदिएको चर्चा छ । ११/६० मा त्रिस्टुभ छन्द (पृथ्वी अन्तरिक्ष द्युलोक) ढाक्ने रुद्रका शक्तिको बयान छ।१२/२६ मा शिवका रूपमा सर्वय शिवमय भएर दशै दिशाको कल्याण (विश्व कल्याण) गर्न शिवको प्रार्थना गरिएको देखिन्छ । बाह्रौं अध्यायकै ३४ औँ र ४४ औँ मन्त्रले शिवलाई स्वर्गीय सुख, शान्ति र प्रकाश (ज्ञान) दिने अतिथि भएर सबैका घर-घरमा डुल्ने देवताका रूपमा वर्णन गर्दै अदितिका छोरा रुद्रले धन सम्पन्नता दिऊन् भनी याचना गरिएको छ ।

शुक्लयजुर्वेदकै १४ औँ अध्यायको २० औँ मन्त्रमा क्रमश: अग्नि आदि १२ देवताहरूमध्ये रुद्रको पनि गन्ती गरिएको छ र २४ औँ मन्त्रमा रुद्रको विशेष अधीनमा चौपाया प्राणी रहने कुरा छ भने ३० औँ मन्त्रमा वसुहरू ११ रुद्रहरू १२ आदित्यहरूको विश्वमा आधिपत्य रहेको संकेत गरिएको देखिन्छ । शुक्लयजुर्वेदको १६ औँ अध्याय पूरै नै रुद्रको चर्चामा सिद्धिएको छ । १६ औँ अध्यायको विशेष प्रयोगमध्ये पहिलो मन्त्रले रुद्रका दुई हातमा धनु र वाण रहेको चर्चा छ भने दोस्रो मन्त्रमा रुद्रको गिरि (पर्वत) हिमाल बस्ने अहिंस्रक मोह र पापनाशक स्वरूपको प्रार्थना तेस्रो मन्त्रमा विद्यापति शिवको प्रार्थना १६/६ मा हजारौँ रूपधारी शिव हाम्रा वरिपरि बसेका छन् भनिएको छ ।

**वेदमा रुद्र वा पशुपति** : वैदिक दर्शन एवं साहित्यमा पशुपति शब्दको प्रयोग रुद्रको पदार्थका रूपमा वैदिककालदेखि नै भएको कुरा ऋग्वेदको समीक्षयबाट स्पष्ट हुन्छ। छैटौं मण्डलका ७४ औँ सोमरुद्र सूक्तका साथै रुद्राध्यायका कतिपय ऋचा ऋङमन्त्र) ऋग्वेदमा नै पाइनुले समेत रुद्र वा पशुपति वा शिव वा महादेवको उपासना पूजाको प्रसंग ऋग्वेदकालदेखि नै शुरु भएको देखिन्छ र यसबाट नेपाल, भारतलगायत समस्त हिन्दुहरूका आराध्यदेव पशुपतिको आराधना, उपासना पद्धति वैदिककालदेखिकै हो भन्ने बुझिन्छ । यो शिव पूजाको परम्परा कुनै जाति वा वर्ग विशेषबाट हिन्दुहरूको वा आर्य, सानातनी, वैदिकहरूले आयात गरेको रहेछ भन्ने कुरा पनि प्रमाणित हुन्छ । जय गुरुदेव !

हामी कहाँ जति पनि प्रकारका पूजा-पार्वण, व्रत-उपवास, पर्वोत्सव प्रचलित छन्, तिनमा शिवरात्रि व्रत समानको प्रचार अन्य कुनैको पनि देखिँदैन । यस विराट् हिन्दु भारतवर्षका स्त्री-पुरुष, बाल-वृद्ध, प्रौढ, युवा, प्रायः सबै कुनै न कुनै रूपमा यसको अनुष्ठानमा रत रहेका देखिन्छन् । धेरैले यथाविधि पूजादि नगरेर पनि उपवास भने गर्दछन् । जसको उपवासमा रुचि हुँदैन, उनीहरू कमसेकम रात्रि जागरण गरेर नै यस व्रतको पुण्यको केही भाग लिन चाहन्छन् ।

सौर, गणपत्य, शैव, वैष्णव र शाक्त– प्रधानतः यिनै पाँच सम्प्रदायहरूमा विराट् हिन्दु समाज विभक्त छ । यिनमा जो जसका उपासक छन्, उनीहरू आफ्ना त्यस इष्टदेवलाई छोडेर अन्यको उपासना प्रायः गर्दैनन् । तर यस शिवरात्रि-व्रतको महिमा छ– शास्त्रमा पनि यस्तै नै विहित भएको छ कि सम्प्रदायको भेदलाई त्यागेर सबै मनुष्य यसको पालन गर्दै रहून् र यसको फलस्वरूप भोग र मोक्ष दुवै प्राप्त गर्न चाहन्छन्–

भजन

## ।। ॐ नमः शिवाय ।।

ॐ नमः शिवाय ॐ नमः शिवाय
हर हर भोले नमः शिवाय
जटाधराय शिव जटाधराय
हर हर भोले नमः शिवाय
दिगम्बराय शिव दिगम्बराय
हर हर भोले नमः शिवाय
नाथेश्वराय शिव नाथेश्वराय
हर हर भोले नमः शिवाय
मंत्रेश्वराय शिव तंत्रेश्वराय
हर हर भोले नमः शिवाय
निखिलेश्वराय शिव निखिलेश्वराय
हर हर भोले नमः शिवाय
ॐ नमः शिवाय ॐ नमः शिवाय
हर हर भोले नमः शिवाय

# महाशिवरात्रि रहस्य

**आचाण्डालमनुष्याणां भुक्तिमुक्तिप्रदायकम् ।**

शिव-पूजा र शिवरात्रि-व्रतमा केही अन्तर छ । व्रत शब्दको निर्वचनबाट हामी बुझ्न सकछौं कि जीवनमा जो वरणीय छ– बारम्बार अनुष्ठानद्वारा मन, वचन, कर्मले जुन प्राप्त गर्न योग्य छ, त्यही व्रत हो । यसैकारण प्रत्येक व्रतका साथ कुनै न कुनै कथा वा आख्यान जोडिएकै पाइन्छ । यी कथाहरूमा यस्ता यस्ता चरित्रहरूको प्रसंग आउँछ जोसित त्यस व्रतको उत्पत्ति, परिणति र समाप्तिको छोटो इतिहास ग्रथित रहन्छन् । यसका अतिरिक्त यी कथाहरूद्वारा यो कुरा पनि प्रमाणित हुन जान्छ कि व्रत मानवजीवनको धर्म-पिपासाको परितृप्तिका लागि केवल बीच-बीचमा मात्रै अनुष्ठान गर्न योग्य होइन, बरु यो त हाम्रो व्यावहारिक जीवनको एउटा प्रधान अंग बन्न सक्दछ ।

ईशानसंहितामा शिवरात्रि-व्रतको सम्बन्धमा भनिएको छ–

**माघकृष्णचतुर्दश्यामादिदेवो महानिशि ।**
**शिवलिङ्गतयोद्भूतः कोटिसूर्यसमप्रभः ॥**
**तत्कालव्यापिनी ग्राह्या शिवरात्रिव्रते तिथिः ॥**

अर्थात् माघ महिनाको कृष्ण-चतुर्दशीको महानिशामा आदिदेव महादेव कोटि सूर्यसमान दीप्तमान भएर शिवलिङ्गको रूपमा आविर्भूत हुनुभएको थियो, अतः शिवरात्रि-व्रतमा उनै महानिशा-व्यापिनी चतुर्दशीको ग्रहण गर्नुपर्दछ ।

माघ-महिनाको कृष्ण चतुर्दशी धेरै त फाल्गुण महिनामा नै पर्दछ । ईशानसंहिताको मतले शिवको प्रथम लिङ्गमूर्ति उक्त तिथिको महानिशामा पृथ्वीबाट पहिलोपटक आविर्भूत भएको थियो । यसैको उपलक्ष्यमा यस व्रतको उत्पत्ति भएको मानिन्छ । यस श्लोकको 'महानिशा' शब्द पनि एक विशिष्ट अर्थको ज्ञापक हो । महर्षि देवल भन्दछन्–

**महानिशा द्वे घटिके रात्रेर्मध्यमयामयोः ।**

चतुर्दशी तिथियुक्त चार प्रहर रात्रिको मध्यवर्ती दुई

प्रहरमा पहिलेको अन्तिम र दोस्रोको आदि– यी दुई घटिकाहरूको (घडी) नै महानिशाको संज्ञा हो ।

व्रत-कथाहरूमा भनिएको पाइन्छ कि एकपटक कैलाश शिखरमा स्थित पार्वतीले शंकरसित सोध्नुभयो–

**कर्मणा केन भगवन् व्रतेन तपसापि वा ।**
**धर्मार्थकाममोक्षाणं हेतुस्त्वं परितुष्यति ॥**

अर्थात् हे भगवान् ! धर्म, अर्थ, काम र मोक्ष यी चतुर्वर्गका हजुर नै हेतु हुनुहुन्छ । साधनाबाट सन्तुष्ट भएर मनुष्यलाई हजुर नै यसलाई प्रदान गर्नुहुन्छ । अत: यो जान्ने इच्छा हुन्छ कि कुन कर्म, कुन व्रत वा कुन प्रकारको तपस्याले हजुर प्रसन्न हुनुहुन्छ ?

यसको जवाफमा भगवान् शंकर भन्नुहुन्छ–

**फाल्गुने कृष्णपक्षस्य वा तिथिः स्याच्चतुर्दशी ।**
**तस्यां या तामसी रात्रिः सोच्यते शिवरात्रिका ॥**
**तत्रोपवासं कुर्वाणः प्रसादयति मां ध्रुवम् ।**
**न स्नानेन न वस्त्रेण न धूपेन न चार्चया ॥**
**तुष्यामि न तथा पुष्पैर्यथा तत्रोपवासतः ॥**

'फाल्गुणको कृष्णपक्षको चतुर्दशी तिथिको आश्रय दिएर जुन अन्धकारमय रजनीको उदय हुन्छ, त्यसैलाई 'शिवरात्रि' भनिन्छ । यस दिन जो उपवास बस्दछ, उसले निश्चय नै मलाई सन्तुष्ट गर्दछ । यस दिन उपवास गर्नाले म जसरी प्रसन्न हुन्छु, त्यसरी त स्नान, वस्त्र, धूप र पुष्पको अर्पणबाट पनि हुँदिन ।'

'पहिलो प्रहरमा दूधबाट शिवको ईशान मूर्तिको, द्वितीय प्रहरमा दहीद्वारा अघोर मूर्तिको, तृतीय प्रहरमा घिउद्वारा वामदेव मूर्तिको एवं चतुर्थ प्रहरमा महद्वारा सद्योजात मूर्तिलाई स्नान गराएर तिनको पूजन गर्नुपर्दछ ।' प्रभातमा विसर्जनपछि कथा सुनेर अमावस्यामा यसो भनेर पारण गर्नुपर्दछ–

**संसारक्लेशदग्धस्य व्रतेनानेन शंकर ।**
**प्रसीद सुमुखो नाथ ज्ञानदृष्टिप्रदो भव ॥**

'हे शंकर ! म नित्य संसारको यातनाबाट दग्ध भइरहेको छु, यस व्रतबाट हजुर ममाथि प्रसन्न हुनुहोस् । हे प्रभो ! सन्तुष्ट भएर हजुर ममाथि ज्ञानदृष्टि प्रदान गर्नुहोस् ।'

'शास्त्रीय अनुष्ठानको मूलमा सर्वत्र नै एउटा गूढ रहस्य निहित रहन्छ । किनकि–

**अज्ञातज्ञापकं हि शास्त्रम् ।**

'शास्त्रहरूको कार्य नै यही हो कि जो ज्ञात छैन त्यसको ज्ञात गराऊन् । शिवरात्रिको व्रताष्ठानमा शास्त्रको कुन चाहिँ गूढ उद्देश्य निहित रहेको छ, त्यसले कुन अज्ञात तत्त्वलाई बताउँछ, यसलाई हामीले बुझ्नु पर्दछ, होइन भने अनुष्ठानको कुनै सार्थकता हुँदैन । तर यस अन्तर्निहित तात्पर्यलाई बुझ्नुपूर्व यससित जुन कथा जोडिएको पाइन्छ, त्यसलाई संक्षेपमा बुझ्नु आवश्यक हुन्छ ।

वाराणसीका एक व्याघ्र शिकारका लागि वनमा गए । त्यहाँ अनेकौं मृगहरूको शिकार गरेर फर्कने बेलामा बाटोमा ऊ थाकेर कुनै वृक्षमुनि सुतेका थिए । निद्रा टुट्दाखेरि त सन्ध्या भइसकेको थियो । चारैतिर भीषण अन्धकार भएकोले बाटो पहिल्याउन गाह्रो थियो । त्यसबेला घर फर्कन असम्भव देखेर ऊ हिंस्रक जन्तुहरूको आक्रमणको भयले वृक्षमाथि चढेर त्यसैमा रात्रि बिताउने विचार गर्न लागे । त्यस दिन भाग्यवश शिवरात्रि थियो र जुन वृक्षमा ऊ बसेको थियो, त्यो बेलको थियो र त्यसको जरामा एउटा प्राचीन शिवलिङ्ग थियो । व्याघ्र शिकारका लागि सबेरै बाहिर निस्कियो र उसले केही पनि खाएको थिएन । यसरी उसको उपवास पनि स्वाभाविक रूपमा भयो । यस अद्भुत माणिकाञ्चन-संयोगबाट र महादेव आशुतोष हुनाको कारण वसन्तको रात्रिमा शीतको थोपाबाट भिजेको बिल्वपत्र व्याघ्रको शरीर छुँदै शिवको त्यस लिङ्गमूर्तिमा गएर झरे, यसबाट आशुतोषको तोषको सीमा नै

कुरा आहारण गरिन्छ, संचय गरिन्छ, त्यही आहार हो–

**आह्रियते मनसा बुद्धया इन्द्रियैर्वा इति आहारः ।**

मन, बुद्धि अथवा इन्द्रियहरूद्वारा जुन बाहिरबाट भित्र आहृत, संग्रहित हुन्छ, त्यसैको नाम आहार हो । स्थूल र सूक्ष्म भेदले यो आहार साधारणत: दुई प्रकारका छन् । मन आदिद्वारा आहृत संस्कार नै सूक्ष्म आहार हो र पञ्च इन्द्रियद्वारा गृहित शब्द-स्पर्शादि स्थूल आहार हुन् । यसबाहेक हामी जसलाई 'आहार' भन्छौँ, त्यो चामल, दाल, व्यञ्जनादि सर्वथा स्थूल आहार हुन् ।

'उपवास' शब्दको धातुमूलक अर्थ 'कसैको समीप रहनु' हो । त्यसैले यहाँ यसको अर्थ शिवको समीप हुनु हो । उपनिषद्हरूमा जसलाई 'शान्तं शिवमद्वैतं यच्चतुर्थं मन्यन्ते' भनिएको छ, त्यस शिवको समीप जानाले स्वभावत: नै जीवको मन, प्राणका समस्त रंगीन बत्तीहरू आफै निभ्न थाल्नेछन् । यसैले उपवासको अर्थ आहार-निवृत्ति अर्थात् स्थूल, सूक्ष्म एवं स्थूलतर आहारको अत्यन्त अभाव । यो उपवास आदि यथोचितरूपेण अनुष्ठित भएको छ भने व्रतको बहिरङ्ग अनुष्ठानहरूमा कमी हुनाले कुनै हानि हुँदैन । यसैकारण शिवरात्रि-व्रतमा 'उपवास' नै प्रधान अंग हो ।

शिवरात्रि-व्रत राति नै किन हुन्छ, अब यस प्रश्नको उत्तर खोजौं । जसरी नदीमा ज्वारभाटा हुन्छ, त्यसरी नै यस विराट् ब्रह्माण्डमा सृष्टि र प्रलयका दुई विभिन्नमुखी स्रोत नित्य बहिरहेको छ । मानचित्रमा जसरी पृथ्वीको विस्तारलाई स-साना आकारमा पाएर त्यसलाई हेर्न हामीलाई सहज हुन जान्छ, त्यसैगरी यस विराट् ब्रह्माण्डमा सृष्टि र प्रलयको जुन सुदीर्घ स्रोत प्रवाहित भइरहेको छ, दिन र रातको क्षुद्र सीमा त्यसलाई अति नै सानो आकारमा प्राप्त गरेर त्यसलाई अधिगत गर्नु हाम्रो लागि सम्भव छ । शास्त्रहरूमा पनि दिन र रातलाई नित्य-सृष्टि र नित्य-प्रलय भनिएको पाइन्छ । एकबाट अनेक र कारणबाट कार्यतिर जानु नै सृष्टि हो र ठीक यसको विपरीत अर्थात् अनेकबाट एक र कार्यबाट कारणतिर जानु प्रलय हो । दिनमा हाम्रा मन, प्राण र इन्द्रियहरू हाम्रो आत्माको समीपबाट भित्रबाट बाहिर विषय-राज्यतिर दौडन्छ र विषयानन्दमा नै मग्न रहन्छ । पुन: राति विषयलाई छोडेर आत्मातिर, अनेकलाई छोडेर एकतिर, शिवतिर प्रवृत्त हुन्छ । हाम्रो मन दिनमा प्रकाशतिर,

रहेन । फलस्वरूप आजीवन दुष्कर्म गरेर पनि त्यस व्याघ्रलाई शिवलोकको प्राप्ति भयो ।

शिवरात्रिको व्रतको स्वरूप र त्यसको कथा संक्षेपमा यही हो । अब यसको तत्त्वलाई बुझ्नका लागि गहिरोसित विचार गर्नु आवश्यक हुन्छ । शिव को हुनुहुन्छ ? उहाँ केवल पौराणिक देवता मात्रै हुनुहुन्छ वा वेदमा पनि उहाँको वर्णन पाइन्छ ? वेदका अनेकौं स्थानमा उहाँलाई रुद्र नामले उल्लेख गरिएको पाइन्छ । साधन-पथमा उहाँ नै ब्रह्मवादीहरूका ब्रह्म, साङ्ख्यमतावलम्वीहरूका पुरुष तथा योगपथमा आरुढ हुनेहरूको सहस्रारमा स्थित प्रणवको अर्ध मात्राको रूपमा कीर्तित हुनुहुन्छ । पुराणहरूमा उहाँको आधिदैविक स्वरूपको अधिक विस्तार तथा उहाँको विविध लीलाहरूको वर्णन हुँदा पनि त्यसमा त्यही गूढ आध्यात्मिक तत्त्व अन्तर्निहित रहेको छ । शिवरात्रि-व्रतमा पनि शिवको यही दार्शनिक परिचय अन्त:सलिला फल्गुको धारा समान प्रच्छन्नरूपेण प्रवाहित भइरहेको छ । त्यसै स्वादु सुशीतल धारामा अवगान गर्नका लागि हामीलाई अझ गहिरोमा डुबुल्की मार्न पर्ने हुन्छ । यस व्रतमा उपवासको प्रधानता किन भयो, यस रात्रिमा नै किन हुन्छ, चतुर्दशी र अमावस्या यी दुई तिथिहरूका साथ यसको योग किन भयो तथा 'पारण' शब्दको यथार्थ अभिप्राय के हो, यी सबै कुरा एक एक गरेर बुझ्नु आवश्यक हुन्छ ।

'उपवास' शब्दको के अर्थ हो ? (आहारनिवृत्तिरूपवास:' साधारण: निराहार रहनुलाई नै 'उपवास' भनिन्छ । तर यस निर्वचनभित्र नै यसको वास्तविक अर्थको संकेत पनि वर्तमान रहको छ । 'आङ्' पूर्वक 'हृ' धातुबाट कर्मवाच्यमा 'घञ्' प्रत्यय लगाउँदा 'आहार' शब्द व्युत्पन्न हुन्छ । यस व्युत्पत्तिअनुसार जे

शिवोपासनाको, शिव पूजाको पुण्य लग्न हो । तत्पश्चात् अमावस्यामा जीवन जब शिवमा एकपटक डुब्दछ, भेदको लेश पनि रहन जाँदैन, 'नेति नेति'को साधनाबाट पूर्ण समाधिमा अद्वैतानुभूतिको चरमोत्कर्ष साधित हुन्छ, तब व्रतको पारण–पूर्णता सम्पन्न हुन जान्छ । त्यसैबेला यो 'इति इति'को साधनामा 'यत्र यत्र मनो याति ब्रह्मणस्तत्र दर्शनम्' यस प्रक्रियाको आरम्भ हुने हुनाले नै शिवरात्रि-व्रतको अनुष्ठान सार्थक हुन्छ ।

यस प्रकार व्रतकथाको तात्पर्यलाई हृदयंगम गर्नाले शिवरात्रिसम्बन्धी हाम्रो अनुसन्धान एक प्रकारले पूर्ण हुन जान्छ ।

सृष्टितिर, भेदभावतिर, अनेकतिर, जगततिर, कर्मकाण्डतिर जान्छ र फेरि राति फर्किन्छ– अन्धकारतिर, लयतिर, अभेदतिर, एकतिर, परमात्मातिर र प्रेमतिर । दिनमा कारणबाट कार्यतिर जान्छ र राति कार्यबाट कारणतिर फर्किन्छ । यसैबाट दिन सृष्टिको र रात प्रलयको द्योतक हो । 'नेति नेति'को प्रक्रियाद्वारा समस्त भूतहरूको अस्तित्व मेटेर समाधियोगमा परमात्मासित आत्मसमाधानको साधना नै शिवको साधना हो । यसैले राति नै यसको मुख्य काल– अनुकूल समय हो । प्रकृतिको स्वाभाविक प्रेरणाले त्यस बेला प्रेम-साधना, आत्मनिवेदन, एकात्मानुभूति सहज नै सुन्दर भएर आउँछ ।

शिवरात्रिको अनुष्ठान राति नै किन हुन्छ, यो त बुझियो । अब यो बुझ्नु छ कि चतुर्दशी तिथिका साथ यसको घनिष्ट संयोग किन भयो । तर चतुर्दशीको तत्त्वलाई बुझ्नु पहिले 'अमावस्या' कसलाई भनिन्छ, यो जान्नु पर्ने हुन्छ । 'अमा' पूर्वक 'वस्' धातुका साथ 'ण्यत्' प्रत्ययको योगले 'अमावस्या' शब्द व्युत्पन्न हुन्छ । यसको व्युत्पत्ति यसरी गर्नुपर्दछ– अमा=सह अर्थात् एक साथ वास गर्दछन्– सूर्य र चन्द्र जुन तिथिमा अवस्थान गर्दछन्, त्यही 'अमावस्या' हो । यो व्याकरण र ज्योतिषसम्मत अर्थ हो । तर साधन-राज्यमा सूर्य र चन्द्र परमात्मा र जीवात्माका बोधक हुन् । अः समाधियोगमा जब जीव र शिव एकत्र अवस्थित हुन्छन् तब त्यो अद्वयानुभूतिको समय नै साधन-राज्यको अध्यात्मशास्त्रको अमावस्या हो । समष्टिभावले प्रकृतिमा जब यस एकात्मानुभूतिको लीला हुन्छ, त्यसबेला व्यष्टिभावले आफूभित्र यो लीलास्वादन सहज हुन जान्छ । तर एकान्त अभेदमा त उपासना हुनै सक्दैन, यसैले चतुर्दशीमा जीव धेरै हदसम्म शिवमा डुब्दछ तर थोरै भेदको रेखा शेष रहन जान्छ । त्यो शुभ मुहूर्त नै जीवनको

शास्त्रमा अनेकौं स्थानमा मनुष्य देहलाई एउटा वृक्षको रूपमा कल्पना गरिएको पाइन्छ । मनुष्यशरीरको स्नायु जालको गठन नै यस कल्पनाको मूल हो । देहको ऊर्ध्वभाग मस्तिष्क नै यस वृक्षको मूल हो, मेरुदण्ड काण्ड हो र हस्त-पादादि अंग-प्रत्यंगको रूपमा यसका अनेकौं शाखा-प्रशाखाहरू फैलिएका छन् । यस अपूर्व वृक्षको मूल ऊर्ध्वदिशामा र शाखा-प्रशाखाहरू अधोदिशामा प्रसारित छन् । यसैले–

**ऊर्ध्वमूलमधःशाखमश्वत्थ प्राहुरव्ययम् ।**

भनेर भनिएको हो ।

उपासक भेदले यस वृक्षलाई कोही अश्वत्थ, कोही बिल्व, कोही कल्पतरु वा कदम्ब भन्ने गर्दछन् । यसैकारण कसैले यसको मूलमा सदाशिव, कसैले श्रीकृष्णलाई, कसैले साक्षात् नारायणलाई देख्दछन् । शिवरात्रिको व्रत-कथामा यसैले बिल्वपत्रको मूलमा शिवको स्थान छ । जीवात्मा नै व्याघ्र हो । इन्द्रियरूप तीरबाट विषयरूप पंक्षीहरूको शिकार गर्नु यसको कार्य हो । यस प्राकृत जीवनको स्रोत जब रूद्ध हुन्छ, जब उसले आफ्नो समस्त कर्मफललाई भगवान्मा अर्पण गर्न सिक्दछ, जब देहरूप बिल्ववृक्षका त्रिगुणरूप त्रिपत्रलाई गुणातीत शिवको मस्तकमा अर्पण गर्दछ, आसक्तिशून्य हुन जान्छ, तब 'पद्मपत्रमिवाम्भसा' अर्थात् जलमा पद्मपत्र समान् त्यो फेरि कर्मको शुभाशुभ फलको भागी हुँदैन, जीवन्मुक्त भएर सामु आएको प्रारब्ध कर्मलाई नै भोग्दै रहन्छ तथा शरीरान्त भएपछि कैलासको कैवल्यधाममा परमानन्द-रसको आस्वादनमा निमग्न हुन जान्छ ।

*(कल्याण, शिवोपासनाङ्क, गीता प्रेस, गोरखपुर)*

# वेदसारशिवस्तवः

पशूनां पतिं पापनाशं परेशं
गजेन्द्रस्य कृत्तिं वसानं वरेण्यम् ।
जटाजूटमध्ये स्फुरद् गंगवारि
महादेव मेकं स्मरामि स्मरामि ॥
महेशं सुरेशं सुरारार्तिनाशं
विभुं विश्वनाथं विभूत्यंगभूषम् ।
विरूपाक्षमिन्द्वर्कं वह्नित्रिनेत्रं
सदानन्दमीडये प्रभुं पञ्चवक्त्रम् ॥
गिरीशं गणेशं गले नीलवर्णं
गजेन्द्राधिरूढं गुणातीतरूपम् ।
भवं भास्वरं भस्मना भूषितांगम्
भवानीकलत्रं भजे पञ्जवक्त्रम् ॥
शिवाकान्त शम्भो शशांकार्धमौले
महेशान शूलिन् जटाजूटधारिन् ।
स्वमेको जगद्व्यापको विश्वरूप
प्रसीद प्रसीद प्रभो पूर्णरूप ॥
परात्मानमेकं जगद्वीजमाद्यं
निरीहं निराकार ओंकारवेद्यम् ।
यतो जायते पाल्यते येन विश्वं
तमीशं भजे लीयते यत्र विश्वम् ॥
न भूमिर्न चापो न वह्निर्न वायु-
र्न चाकाशमास्ते न तन्द्रा न निद्रा ।
न ग्रीष्मो न शीतं न देशो न वेषो
न यस्यास्ति मूर्तिस्त्रिमर्तिं तमीडये ॥
अजं शाश्वतं कारणं कारणानां
शिवं केवलं भासकं भासकानाम् ।
तुरीयं तमःपारमाद्यन्तहीनं
प्रपद्ये परं पावनं द्वैतहीनम् ॥
नमस्ते नमस्ते विभो विश्वमूर्ते
नमस्ते नमस्ते चिदानन्दमूर्ते ।
नमस्ते नमस्ते तपोयोगगम्य
नमस्ते नमस्ते श्रुतिज्ञानगम्य ॥
प्रभो शूलपाणे विभो विश्वनाथ
महादेव शम्भो महेशं त्रिनेत्र ।
शिवाकान्त शांत स्मरारे पुरारे
त्वदन्यो वरेण्यो न मान्यो न गण्यः ॥
शम्भो महेश करुणामय शूलपाणे

गौरीपते पशुपते पशुपाशनाशिन् ।
काशीपते करुणाया जगदेतदेक-
स्त्वं हंसि पासि विदधासि महेश्वरोऽसि ॥
त्वत्तो जगद्भवति देव भव स्मरारे
त्वय्येव तिष्ठति जगन्मृड विश्वनाथ ।
त्वय्येव गच्छति लयं जगदेतदीश
लिंगात्मक हर चराचरविश्वरूपिन् ॥

स्तोत्र

# पशुपत्यष्टकम्

शंकर त्रिदशनाथ दयालो, भाललोचन हर त्रिपुरारे ।
अच्युताव्यय-कलाधर-मौले, मानसं पशुपते हर दुःखम् ॥१॥
कालकालकरुणामय शूलिन् कान्तकाय कलिवाशनमूर्तेः ।
काल-कूट कलिताऽसितकण्ठ मानसं पशुपते हर दुःखम् ॥२॥
केशवप्रिय पिशङ्ग कपर्दिन् पार्वतीश्वर पिनाक धरेश ।
मन्मथ प्रमथ कासविकासिन् मानसं पशुपते हर दुःखम् ॥३॥
कुन्द-हीरक-सुधाकर-गौर निष्कलंक निखिलागमवेद्य ।
त्र्यक्ष निर्गुण गुणेश्वर जिष्णो मानसं पशुपते हर दुःखम् ॥४॥
पुण्यकीर्तन पुराण पुरारे पूर्णरूप पुरुषोत्तम पुण्य ।
पञ्चवक्त्र पुरुष प्रमथेन्द्र मानसं पशुपते हर दुःखम् ॥५॥
भोगिभूषण विभूषित-भोग भूतिशोभित तनोहरिकेश ।
भक्तहृत्कमलवेश्म-निवासिन् मानसं पशुपते हर दुःखम् ॥६॥
शुद्धभाव नतकन्धरलोक-वृन्द वाञ्छितफलप्रद शम्भो ।
सृष्टिपालनविनाश निदान मानसं पशुपते हर दुःखम् ॥७॥
दुष्टनिर्दलन निर्जर देव स्वर्णदी-भुवनशेखर शर्व ।
वामदेव मतिगम्य महात्मन् मानसं पशुपते हर दुःखम् ॥८॥
शंकराष्टकमिदं सुमनोज्ञं रोग-शोक-कलहार्तिविनाशम् ।
यः पठेत् सकलवाञ्छित सिद्धिस्तस्य तुष्ट इह शंकरदेवः ॥९॥

शिवरात्रिको सम्बन्धमा शिव पुराणको विधेश्वर-संहितामा उल्लिखित वर्णन यसप्रकार छ–

एकपटक ब्रह्मा र विष्णुले शङ्करको पूजा गरी दिवस मनाउनुभयो । दुवैले शङ्करलाई मौनतापूर्वक प्रणाम गरी श्रेष्ठ आसनमा राखी पवित्र पदार्थद्वारा उहाँको सम्मान गर्न'भयो । यसरी विनम्र ब्रह्मा र विष्णुदेखि खुशी भई शङ्करले भन्नुभयो– "आज म यस महादिवसमा तपाईंहरूको पूजा र उत्सवद्वारा प्रसन्न भएको छु । यो दिवस महापवित्र हुनेछ र यो तिथिको रात्रि मेरो परम प्रिय हुनेछ । यस कालमा (रात्रिमा) मेरो प्रतिमामा जसले पूजा गर्छ ऊ सृष्टि, स्थिति आदि जगत्कृत्य बुझेर सबै काम गर्न समर्थ हुनेछ । जसले जितेन्द्रिय भई यस शिवरात्रिको राति निराहार बसी यथाशक्ति प्रपञ्च त्यागी पूजा गर्दछ, एक वर्षसम्म निरन्तर मलाई भक्ति गर्नेले जे फल पाउँछ, उसलाई सो फल प्राप्त हुन्छ । अर्थात् सो फल केवल एकपटक गरेको शिवरात्रिको पूजाबाट नै प्राप्त गर्दछ । जसरी चन्द्रमालाई देखेर समुद्रको पानी माथि बढ्दछ त्यस्तै गरी यो समय शिवरात्रि पनि मेरो धर्म वृद्धिको समय हो जुन समयमा मङ्गल हुने प्रतिष्ठा आदि उत्सव हुन्छ । जुन स्तम्भ रूपले मेरो आविर्भाव भएको छ यो समय मार्गशीर्ष आर्द्रा नक्षत्रले युक्त छ । मागशीर्ष आर्द्रा नक्षत्रमा पार्वतीसहित मलाई शिवलिङ्गमा जसले देख्तछ अर्थात् दर्शन गर्दछ, ऊ मलाई अत्यन्त प्रिय हुनेछ । यस शुभ दिवसमा शिवको दर्शन मात्रले पनि अधिक फल मिल्दछ । पूजा गर्दा प्राप्त हुने फलको त बयान गर्न नै सकिँदैन । यस रणरङ्गलमा (सृष्टि र संहारको जगत्मा) म लिङ्ग (परमात्माको स्वरूप देह) सहित प्रकट भएको हुँ । अत: लिङ्गवत् (परमात्मा समान) भएकोले यो स्थान (रणरङ्गल) पनि लिङ्ग स्थान (परमात्माको प्रादुर्भाव भएको स्थान) भनिनेछ । यहाँ रथयात्राको उत्सव हुनु र मानिस रहनु कल्याण हुनेछ । यहाँ गरिएका जप, तप, हवन सबै ठूलो गुणका हुनेछन् । यो स्थान मेरा सबै क्षेत्रहरूमा श्रेष्ठ हुनेछ । यहाँ मेरो स्मरण गर्दैमा पनि प्राणीहरू मुक्त हुन्छन् । यसैले यो क्षेत्र महान् र अत्यन्त शोभायुक्त हुनेछ, सबै प्रकारका कल्याण दिने तथा मोक्ष दिने हुनेछ । यहाँ जो व्यक्तिले लिङ्गमा (परमेश्वरको प्रतिमामा) म लिङ्गरूपी ईश्वरको भावना गरी पूजा गर्दछ उसलाई सालोक्य, सामीप्य, सारूप्य, सृष्टि तथा सायुज्य यी पाँच प्रकारका मुक्तिका फल मिल्नेछन् र यहाँ पूजा गर्नाले तपाईंहरूको पनि सबै मनोरथ पूर्ण हुनेछ ।"

शिवरात्रि व्रत सम्बन्धमा शिव पुराणको कोटि रुद्र-संहितामा पनि उल्लेख गरिएको छ । यो वर्णन एकपटक भगवान् हरि (विष्णु) र अन्य देवताहरूले कुन चाँहि व्रतले भुक्ति मुक्ति (भोग र मोक्ष) दुवै प्राप्त हुनेछ भनी सोधनी गर्दा भगवान् शङ्करले शिवरात्रि व्रतको माहात्म्य बताउनुभएको सम्बन्धमा सूतजीले ऋषिहरूलाई सुनाउनुभएको हो जुन यस प्रकार छ–

धध

यसरी शिवरात्रिको सम्पूर्ण व्रतविधि भगवान् शिवले विष्णुलाई बताउनुभयो । यसरी व्रत गर्नेसँग भगवान् शिव कहिल्यै टाढा नहुने कुरा विष्णुलाई अवगत गराउनुभयो । यसरी भगवान् शङ्करबाट शिवरात्रि व्रतको उपदेश सुनी भगवान् विष्णुले पनि यो पवित्र व्रत गर्नुभयो र उहाँले नारदलाई पनि यो व्रतको उपदेश दिनुभयो ।

जय गुरुदेव !

# शिव पूजन

भगवान् शिव मात्र यस्ता महादेव हुनुहुन्छ जसका लागि सुख दुःख, पाप पुण्य, स्वर्ग नरक, देवता दैत्य समान छन् । त्यसैले उहाँ परब्रह्म, सर्वव्यापी, सर्वहितैषी तथा सर्वाश्रय हुनुहुन्छ । भगवान् शंकरको द्वारबाट कोही पनि खाली हात फर्कदैन । आशुतोष भगवान् शंकर भक्तको भावनाबाट मात्र पनि शीघ्र नै प्रसन्न हुनुहुन्छ ।

भगवान् शिवको पूजनको लागि सर्वश्रेष्ठ अवसर महारात्रि अर्थात् शिवरात्रि नै हो । ईशान संहितामा भनिएको छ–

**माघकृष्णचतुर्दश्यामादिदेवो महानिशि ।**

**शिवलिङ्गतयोद्भूतः कोटिसूर्यसमप्रभः ॥**

जसको अर्थ हुन्छ माघ कृष्ण चतुर्दशीको महारात्रिमा आदिदेव महादेव करोडौं सूर्यको समान दीप्तिसम्पन्न भई शिवलिङ्गको रूपमा आविर्भूत हुनुभएको थियो । त्यसैले महाशिवरात्रिको दिव्य अवसरमा अथवा उक्त दिन सम्पन्न गर्न नसकिएमा कुनै पनि सोमबार भक्तवत्सल भगवान् शिवको पूजा, आराधना गरी मोक्षगति प्राप्त गर्न अघि बढौं ।

**पूजन सामग्री**

पारद शिवलिङ्ग, पाँच पञ्चमुखी रुद्राक्ष, जाइफल एवं अन्य पूजन सामग्रीहरू ।

**पूजन विधि**

शिवरात्रिको साँझ प्रदोषकालमा नुहाइ -धुवाइ गरी चोखो वस्त्र लगाएर आफ्नो पूजाकोठामा उत्तर अथवा पूर्व दिशापट्टि फर्किएर आसन ओछ्याएर बस्नुहोस् । आफ्नो अगाडि पूजा गर्नको लागि सबै पूजा सामग्री राख्नुहोस् । धूप, बत्ती बाल्नुहोस् । कुनै थालीमा पारद शिवलिङ्गलाई स्थापना गर्नुहोस् ।

**पवित्रीकरण**

पञ्चपात्रमा जल लिई बायाँ हातमा राखेर निम्न मन्त्र उच्चारण गर्नुहोस् ।

ॐ **अपवित्रः पवित्रो वा सर्वावस्थां गतोऽपि वा ।**

**यः स्मरेत् पुण्डरीकाक्षं स बाह्याभ्यन्तरः शुचिः ॥**

अब दाहिने हातले पवित्रीकरण गर्नको लागि आफूलाई जल छर्कनुहोस् ।

**आचमन**

आचमनीले जल लिएर निम्न मन्त्रबाट तीनपटक आचमन गर्नुहोस् ।

ॐ **केशवाय नमः ।**

ॐ **माधवाय नमः ।**

ॐ **नारायणाय नमः ।**

यसपछि हात धुनुहोस् ।

**न्यास**

दाहिने हातमा जल लिएर त्यसमा अक्षता र फूल मिलाएर फेरि निम्न श्लोक उच्चारण गर्दै न्यास गर्नुहोला ।

ॐ **अस्य शिव पञ्चाक्षर मंत्रस्य वामदेव ऋषिः, अनुष्टुप् छन्दः, श्री सदाशिव देवता, ॐ बीजं, नमः शक्तिः, शिवाय कीलकं, श्री साम्बं सदा शिव प्रीत्यर्थं न्यासे विनियोगः ।**

जललाई भूमिमा छोडिदिनुहोस् ।

**करन्यास**

निम्न मन्त्रबाट कर न्यास गर्नुहोस् ।

ॐ ॐ **अंगुष्ठाभ्यां नमः ।**

ॐ **नं तर्जनीभ्यां नमः ।**

ॐ **मं मध्यमाभ्यां नमः।**

ॐ **शिं अनामिकाभ्यां नमः ।**

ॐ **वां कनिष्ठिकाभ्यां नमः ।**

ॐ **यं करतलकर पृष्ठाभ्यां नमः ।**

**अङ्गन्यास**

निम्न मन्त्र उच्चारण गर्दै अङ्गन्यास गर्नहोस् ।

ॐ ॐ **हृदयाय नमः।**

ॐ **नं शिरसे स्वाहा ।**

ॐ **मं शिखायै वषट् नमः।**

ॐ **शिं कवचाय हुम् ।**

ॐ **वां नेत्रत्रयाय वौषट् ।**

ॐ **यं अस्त्राय फट् ।**

**ध्यान**

**ध्यायेन्नित्यं महेशं रजतगिरिनिभं चारुचन्द्रावतंसं,**

**रत्नाकल्पो ज्ज्वलाङ्गं परशुमृगवरा भीतिहस्तं प्रसन्नं ।**

**पद्मासीनं समन्तात् स्तुतममर गणैर्व्याघ्रकृतिं वसानं**

**विश्वाद्यं विश्ववन्द्यं निखिलभयहरं पञ्चवक्त्रं त्रिनेत्रं ।**

यसपछि शिवलिङ्गको वरिपरि निम्नलिखित दिशाहरूमा पाँच रुद्राक्षहरू स्थापित गरेर आफ्ना मनोकामनाहरू सम्झनुहोस् ।

ॐ **नं तत्पुरुषाय नमः (पूर्व दिशामा)**

ॐ **मं अघोराय नमः (दक्षिण दिशामा)**

ॐ **शिं सद्योजाताय नमः (पश्चिम दिशामा)**

ॐ **वां वामदेवाय नमः (उत्तर दिशामा)**

ॐ **यं ईशानाय नमः (शिवलिङ्गमाथि)**

**आसन**

निम्न मन्त्र पढ्दै फूलको आसन अर्पण गर्नुहोस् ।

ॐ **नमः शिवाय - सद्योजाताय वै नमो नमः ।**

अब निम्न मन्त्रसँगै दुई आचमनी जल चढाउनुहोस् ।

ॐ **नमः शिवाय - भवे भवे नाति भवे भवस्य माम् ।**

**अर्घ्य**

निम्न मन्त्रबाट भगवान् शिवलाई अर्घ्य दिनुहोस् ।

ॐ **नमः शिवाय - भवोद्भवाय नमः ।**

**स्नान**

निम्न मन्त्रसँगै भगवान् शिवलाई जलले स्नान गराउनुहोस् ।

ॐ **नमः शिवाय - वामदेवाय नमः ।**

अब निम्न मन्त्र उच्चारण गर्दै शिवजीलाई विशिष्ट स्नान गराउनुहोस् ।

ॐ **भवं देवं तर्पयमि ।** ॐ**शर्वं देव तर्पयामि ।**

ॐ **ईशानं देवं तर्पयामि ।** ॐ **पशुपतिं देवं तर्पयामि ।**

ॐ **रुद्रं देवं तर्पयामि ।** ॐ **उग्रं देवं तर्पयामि ।**

ॐ **भीमं देवं तर्पयामि ।** ॐ **महान्तं देवं तर्पयामि ।**

ॐ **साम्ब सदाशिवाय नमः ।**

**वस्त्र**

अब निम्न मन्त्र पढ्दै भगवान् शिवलाई वस्त्र अर्पण गर्नुहोस् ।

ॐ **नमः शिवाय श्रेष्ठाय नमः ।**

**तिलक**

निम्न मन्त्रसँगै तिलक लगाइदिनुहोस् ।

**ॐ नमः शिवाय कालाय नमः।**

अब निम्न मन्त्रसँगै अक्षता एवं फूल समर्पित गर्नुहोस् ।

**ॐ नमः शिवाय कलविकरणाय नमो बलविकरणाय नमः ।**

**धूप**

निम्न मन्त्र उच्चारण गर्दै धूप बालेर देखाइदिनुहोस् ।

**ॐ नमः शिवाय सर्वभूतदमनाय नमः ।**

**दीप**

निम्न मन्त्र पढ्दै बलिरहेको दीयो देखाइदिनुहोस् ।

**ॐ नमः शिवाय मनोन्मनाय नमः ।**

**नैवेद्य**

निम्न मन्त्रसँगै जाइफल नैवेद्य चढाउनुहोस् ।

**ॐ नमः शिवाय भवोद्भवाय नमः ।**

यसपछि ल्वाङ, अलैंचीसहित पान समर्पित गर्नुहोस ।

फेरि ॐ नमः शिवाय, यस मूल मन्त्रको पाँच माला जप प्राण-प्रतिष्ठित रुद्राक्ष मालाले गर्नुहोस् ।

अब पुष्पाञ्जली एवं नमस्कार गरेर निम्न मन्त्रबाट भगवान् शिवसँग क्षमा प्रार्थना गर्नुहोस् ।

**मृत्युञ्जय महादेव त्राहि मां शरणागतम् ।**
**जन्म मृत्यु जरा व्याधि पीडितं कर्मबन्धनैः ॥**
**यदक्षरं पदं भ्रष्टं मात्राहीनं च यद् भवेत् ।**
**तत्सर्वं क्षम्यतां देव प्रसीद परमेश्वर ॥**

अभिलषित मनोकामना पूर्ति, गृहस्थ सुख एवं पूर्णता प्राप्तिका लागि शिवरात्रि पूजनको जीवनमा महत्त्व हुन्छ किनकि भगवान् शङ्कर ज्ञान प्रदान गर्ने महादेव हुनुहुन्छ । उहाँबाट नै जीवनमा सुख, सौभाग्यको प्राप्ति सम्भव छ । यदि तपाईं चाहनुहुन्छ भने चार पूजा चार प्रहरमा नै गर्न सक्नुहुन्छ ।

यसपछि अभिषेक सम्पन्न गरेर निम्न आरती एवं समर्पण गर्नुहोस् ।

**कर्पूर गौरं करुणावतारं संसारसारं भुजगेन्द्र हारम् ।**
**सदा वसन्तं हृदयारविन्दे भवं भवानी सहितं नमामि ॥**
**जय शिव ॐ कारा, भज शिव ॐ कारा ।**
**ब्रह्मा, विष्णु सदाशिव अर्द्धाङ्गी धारा ॥१॥**
**ॐ हर हर....................**
**एकानन चतुरानन पंचानन राजे ।**
**हंसासन गरुडासन वृषवाहन साजे ॥२॥**
**ॐ हर हर ..................**
**दो भुज चारू चतुर्भुज दशभुज अति सोहे ।**
**तीनों रूप निरखते त्रिभुवन जन मोहे ॥३॥**
**ॐ हर हर ...................**
**अक्षमाला वनमाला रूंडमाला धारी ।**
**त्रिपुरानाथ मुरारी करमाला धारी ॥४॥**
**ॐ हर हर.......................**
**श्वेताम्बर पीताम्बर बाघाम्बर अङ्गे ।**
**सनकादिक गरुडादिक भूतादिक सङ्गे ॥५॥**
**ॐ हर हर .....................**
**करमध्ये इक मण्डल चक्र त्रिशूल धर्ता ।**
**सुखकर्ता दुःखहर्ता सुख में शिव रहता ॥६॥**
**ॐ हर हर........................**
**काशी में विश्वनाथ विराजे नंदी ब्रह्माचारी ।**
**नित उठ ज्योति जलावत दिन दिन अधिकारी ॥७॥**
**ॐ हर हर.........................**
**ब्रह्मा विष्णु सदा शिव जानत अविवेका ।**
**प्रणवाक्षर ॐ मध्ये ये तीनों एका ॥८॥**
**ॐ हर हर.........................**
**त्रिगुणा स्वामी की आरती जो कोई नर गावे**
**ज्योरा मन शुद्ध होय जावे, ज्योरा पाप परा जावे**
**ज्योरा सुख सम्पत्ति आवे, ज्योरा दुःख दारिद्रय जावे**
**ज्योरा घर लक्ष्मी आवे, भगत भोलानन्द स्वामी,**
**रटत शिवानन्द स्वामी इच्छित फल पावे ॥९॥**
**ॐ हर हर ......................**

**समर्पण**

**गतं पापं गतं दुःखं गतं दारिद्र्यमेव च ।**
**आगता सुख सम्पत्ति पुण्याणि तव दर्शनात् ॥**
**देवो दाता च भोक्ता च देवरूपमिदं जगत् ।**
**देवं जपति सर्वत्र यो देवः सोऽहमेव हि ॥**
**साधुवाऽसाधु वा कर्म यद्यदाचरितं मया ।**
**तत् सर्वं कृपया देव गृहाणाराधनं मम् ॥**

शिवको आरतीमा सबैभन्दा अगाडि शिव-चरणको ध्यान गर्नुहोस् र चारपटक आरती गर्नुहोस् ।

फेरि नाभिकमलको ध्यान गरेर दुईपटक, मुखको स्मरण गरेर एकपटक तथा सम्पूर्ण शरीरको स्मरण गर्दै सातपटक गरेर चौधपटक आरती गर्नुहोस् । यसपछि शङ्खमा अथवा अर्घ्यपात्रमा जल लिएर घुमाएर छोडिदिनुहोस् र निम्न मन्त्र पढनुहोस् ।

**ॐ द्यौः शान्तिरन्तरिक्ष (गं) शान्तिः पृथिवी शान्तिरापः शान्तिर्विश्वेदेवाः शान्तिः शान्तिरेव शान्तिः सामाशान्तिरेधि ।**

आरती सकिएपछि एक चित्त गरेर शिर झुकाई शिव स्तुति गर्नुहोस् र आफ्नो दुवै हातमा फूल लिएर भगवान् शिवको ध्यान गरेर आमा पार्वती, गणपति, कार्तिकेय, ऋद्धि-सिद्धि, शुभ-लाभलाई आफ्नो घर परिवारमा पूर्ण रूपले स्थापना गरेर प्रार्थना गर्नुहोस् र फूल चढाउनुहोस् ।

दोस्रो दिन शिवलिङ्गलाई पूजा कोठामा स्थापित गर्नुहोस् र प्रतिदिन शिवपूजन गर्नुहोस् । रुद्राक्ष एवं जाइफललाई रातो कपडामा बाँधेर ढुकुटीमा राखिदिनुहोस् जसले गर्दा लक्ष्मी सधैँ तपाईंको घरमा बास गर्नुहुनेछ ।

जय गुरुदेव !

# शुभकामना !

यस आश्रमका गुरुसेवा दलका सदस्य
साधक आशिष अधिकारीज्यू
दाम्पत्यजीवनमा प्रवेश गर्नुभएको
खुशियालीमा हार्दिक बधाई दिँदै
नवदम्पत्तिको दाम्पत्यजीवन
सफल रहोस् भनी
परमपूज्य सद्गुरुदेवहरुसँग
हार्दिक प्रार्थना गर्दछौं ।

## सिद्धाश्रम शक्ति केन्द्र

बसुन्धरा, काठमाडौँ

# शुभकामना !

यस आश्रमका गुरुसेवा दलका सदस्य
साधक किशोर श्रेष्ठज्यू
दाम्पत्यजीवनमा प्रवेश गर्नुभएको
खुशियालीमा हार्दिक बधाई दिँदै
नवदम्पत्तिको दाम्पत्यजीवन
सफल रहोस् भनी
परमपूज्य सद्गुरुदेवहरुसँग
हार्दिक प्रार्थना गर्दछौं ।

## सिद्धाश्रम शक्ति केन्द्र

बसुन्धरा, काठमाडौँ

जटाटवीगलज्जलप्रवाहपावितस्थले
गलेऽवलम्ब्य लम्बितां भुजङ्गतुङ्गमालिकाम् ।
डमड्डमड्डमड्डमन्निनादवड्डमर्वयं
चकार चण्डताण्डवं तनोतु नः शिवः शिवम् ॥१॥
जटाकटाहसम्भ्रमभ्रमन्निलिम्पनिर्झरी
विलोलवीचिवल्लरीविराजमानमूर्द्धनि ।
धगद्धगद्धगज्ज्वलल्ललाटपट्टपावके
किशोरचन्द्रशेखरे रतिः प्रतिक्षणं मम ॥२॥
धराधरेन्द्रनन्दिनीविलासबन्धुबन्धुर-
स्फुरद्दिगन्तसन्ततिप्रमोदमानमानसे ।
कृपाकटाक्षधोरणीनिरुद्धदुर्धरापदि
क्वचिद्दिगम्बरे मनो विनोदमेतु वस्तुनि ॥३॥
जटाभुजङ्गपिङ्गलस्फुरत्फणामणिप्रभा-
कदम्बकुङ्कुमद्रवप्रलिप्तदिग्वधूमुखे ।
मदान्धसिन्धुरस्फुरत्त्वगुत्तरीयमेदुरे
मनो विनोदमद्भुतं बिभर्तु भूतभर्तरि ॥४॥
सहस्रलोचनप्रभृत्यशेषलेखशेखर-
प्रसूनधूलिधोरणीविधूसराङ्घ्रिपीठभूः ।
भुजङ्गराजमालया निबद्धजाटजूटकः
श्रियै चिराय जायतां चकोरबन्धुशेखरः ॥५॥
ललाटचत्वरज्वलद्धञ्जयस्फुलिङ्गभा-
निपीतपञ्चसायकं नमन्निलिम्पनायकम् ।
सुधामयूखलेखया विराजमानशेखरं
महाकपालि सम्पदे शिरो जटालमस्तु नः ॥६॥
करालभालपट्टिकाधगद्धगद्धगज्ज्वल-
द्धनञ्जयाहुतीकृतप्रचण्डपञ्चसायके ।
धराधरेन्द्रनन्दिनीकुचाग्रचित्रपत्रक
प्रकल्पनैकशिल्पिनि त्रिलोचने रतिमर्म ॥७॥
नवीनमेघमण्डलीनिरुद्धदुर्धरस्फुर-
त्कुहूनिशीथिनीतमः प्रबन्धबद्धकन्धरः ।
निलिम्पनिर्झरीधरस्तनोतु कृत्तिसिन्धुरः
कलानिधानबन्धुरः श्रियं जगद्धुरन्धरः ॥८॥
प्रफुल्लनीलपङ्कजप्रपञ्चकालिमप्रभा-
वलम्बिकण्ठकन्दलीरुचिप्रबद्धकन्धरम् ।
स्मरच्छिदं पुरच्छिदं भवच्छिदं मखच्छिदं
गजच्छिदान्धकच्छिदं तमन्तकच्छिदं भजे ॥९॥
अखर्वसर्वमङ्गलाकलाकदम्बमञ्जरी-
रसप्रवाहमाधुरीविजृम्भणामधुव्रतम् ।
स्मरान्तकं पुरान्तकं भवान्तकं मखांतकं
गजान्तकान्धकान्तकं तमन्तकान्तकं भजे ॥१०॥
जयत्वदभ्रविभ्रमभ्रमद्भुजङ्गमश्वस-
द्विनिर्गमत्क्रमस्फुरत्करालभालहव्यवाट् ।
धिमिद्धिमिद्धिमिद्ध्वनन्मृदङ्गतुङ्गमङ्गल
ध्वनिक्रमप्रवर्तितप्रचण्डताण्डवः शिवः ॥११॥
दृषद्विचित्रतल्पयोर्भुजङ्गमौक्तिकस्रजो-
र्गरिष्ठरत्नलोष्ठयोः सुहृद्विपक्षपक्षयोः ।
तृणारविन्दचक्षुषोः प्रजामहीमहेन्द्रयोः
समप्रवृत्तिकः कदा सदाशिवं भजाम्यहम् ॥१२॥
कदानिलिम्पनिर्झरीनिकुञ्जकोटरे वसन्
विमुक्तदुर्मतिः सदा शिरःस्थमञ्जलिं वहन् ।
विलोललोललोचनो ललामभाललग्नकः
शिवेति मन्त्रमुच्चरन् कदा सुखी भवाम्यहम् ॥१३॥
इमं हि नित्यमेवमुक्तमुत्तमोत्तमं स्तवं
पठन्स्मरन्ब्रुवन्नरो विशुद्धिमेति सन्ततम् ।
हरे गुरौ सुभक्तिमाशु याति नान्यथा गतिं
विमोहनं हि देहिनां सुशङ्करस्य चिन्तनम् ॥१४॥
पूजावसानसमये दशवक्त्रगीतं
यः शम्भुपूजनपरं पठति प्रदोषे ।
तस्य स्थिरां रथगजेन्द्रतुरङ्गयुक्तां
लक्ष्मीं सदैव सुमुखीं प्रददाति शम्भुः ॥१५॥
इति श्रीरावणकृतं शिवताण्डवस्तोत्रं सम्पूर्णम् ।

# स्तोत्र पाठबाट लाभ

शिव ताण्डव स्तोत्रको नित्य पाठबाट साधकको मनमा अपूर्व शान्ति व्याप्त हुन्छ । यसको नियमित पाठबाट काम, क्रोध, अहंकार, लोभ, मोह आदि कुप्रवृत्तिहरू समाप्त हुन थाल्दछन् साथै चित्त पवित्रातिर गतिशील हुनथाल्दछ । यही स्थिति बढ्दै-बढ्दै साधकले शिवत्व प्राप्ति गर्दछ । यस स्तोत्रको पाठबाट सधैँ भगवान् शिवको कृपा साधकलाई बर्सिरहन्छ र यस्तो साधकको जीवनमा अर्थात उसको घरमा अकाल मृत्यु हुँदैन । उसको घर मा हर प्रकारको ऐश्वर्य, धन, सम्पदाको वृद्धि हुनजान्छ तथा कहिल्यै पनि अर्थिक अभाव अनुभव हुँदैन । जस्तोसुकै विपत्ति किन नआओस् यस स्तोत्रलाई केही दिनसम्म पाठ गर्नाले शान्त हुनपुग्दछ, कैयौँ साधकहरूको यस्तो प्रत्यक्ष अनुभव रहेको छ । यस स्तोत्र पाठ गर्ने साधकमाथि शत्रु हावी हुनसक्दैन र यदि कुनै विषम परिस्थिति आएको छ भने पनि अविचलित भएर त्यससँग संघर्ष गर्नको लागि पूर्ण सामर्थ्य प्राप्त गर्दछ नै । हर अवस्थामा ऊ भगवान् शिव जसरी नै आनन्दित एवं प्रसन्न बनिरहन्छ ।

यस स्तोत्रलाई प्रदोषकालमा पारद शिवलिङ्ग अगाडि पाठ गर्दा अझ बढी लाभप्रद हुन्छ । भगवान् शिवलाई बेलपत्र एवं पुष्प अर्पित गरेर सोमबार अथवा प्रदोषमा यस स्तोत्रलाई पाठ गरियो भने अत्यन्त अनुकूलताको वातावरण सिर्जना हुन जान्छ । जय गुरुदेव !

# गुरुधाम जोधपुर तीर्थयात्रा संस्मरण

*परमपूज्य सद्गुरुदेवहरु श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा एवं आशीर्वादस्वरूप गत पौष महिनामा सम्पन्न गुरुधाम जोधपुर लगायत भारतका विभिन्न तीर्थस्थलहरुको भ्रमण क्रममा विभिन्न साधकसाधिकाहरूले यात्रा संस्मरणलाई आफ्नो स्मरणपटलमा कैद गर्नुभएको गर्नुभएको थियो । यसै क्रममा सम्पर्क कार्यालय पोखरा र ामघाटकी सल्यान चौतारी कास्की बस्नुहुने ६१ वसन्त पार गरिसक्नु भएकी साधिका जानकी के.सी. को यात्रा-संस्मरणलाई प्रकाशन गरेका छौं ।*

२०६९ साल पौष महिनाको ६ गते पोखराबाट बसमा यात्रा शुभारम्भ गरेर भोलिपल्ट भारतको गोरखपुर पुगेर श्री श्री महायोगी गुरु गोरखनाथको दर्शन गरियो । त्यहाँ भित्र माता लक्ष्मी, माता सरस्वती, माता दुर्गा सबैको तस्विर राखिएको थियो । त्यहाँ १०८ ऋषिमुनिहरुले तपस्या गर्नुभएको दृश्य पनि थियो । तेस्रो दिन आइतबार बिहान ४ बजे सबै उठी नुहाइधुवाई सकेर काशी (भागीरथी गंगा ) घाटमा गयौं । पारिपट्टिको घाटमा डुंगामा गयौं । सबैले गुरु च्यादर ओढेका हुनाले हामीलाई डर त्रास केही थिएन । टाढा टाढाबाट पहेँलो गुरु च्यादर ओढेको देखिन्थ्यो । तीर्थयात्रुहरुमा ६ वर्षकी सानी बालिका र ८१ वर्षकी एउटी आमा साथै हुनुभएकोले यात्रालाई सुस्तरीका साथ अगाडि बढाउनु परेको थियो । काशीमा १२ ज्योतिर्लिंगहरुमध्येको एक विश्वनाथ बाबाको दर्शन गर्ने सौभाग्य प्राप्त भयो । यसपछि हामी इलाहावादतिर हुइँकियौं । प्रसिद्ध कुम्भमेला लाग्ने स्थान इलाहावादमा यसपटक २४ औं वर्षपछि लाग्ने कुम्भमेलाको तयारी भइरहेको थियो । दिउँसो उद्घाटन समारोह भएको थियो ।

बिहान बस चढेर प्रयागतिर लाग्यौं । यमुना, जमुना र सरस्वती पवित्र नदी बहेको स्थान प्रयागबाट अलि माथितिरको पातालपुर अशोका भन्ने स्थानमा आयौं । कल्पवृक्ष रहेको यस स्थानमा आफ्ना बुबा राजा दशरथको श्राद्ध गर्न भगवान् श्रीराम आउनुभएको थियो भन्ने भनाइ पाइन्छ । पातालपुरमा भगवान् श्रीर ाम, सीता, लक्ष्मण, नाग, गणाधीश गणेश, देवाधिदेव महादेव, माता पार्वती, ऋषिमुनिहरुका शिला देखिन्छन् । कानपुरमा आइपुग्दा र ाति ४ बजेको थियो ।

पाँचौ दिन ताजमहलको अवलोकन भ्रमण सम्पन्न गऱ्यौं । ताजमहल घुम्न तीन घण्टा लागेको थियो । त्यहाँबाट साढे दुई बजे गोवर्धन पुग्यौ । गोवर्धन पर्वत, राधाकृष्णको श्रीमूर्तिको दर्शन, यताउता गरेपछि धेरै लामो बाटो तय गरेर वृन्दावन मथुरा आइपुग्यौं । भगवान् कृष्णको जन्मस्थल यस ऐतिहासिक ठाउँ अति नै दिव्य एवं भव्य छ ।

पौष ११ गते छैटौं दिन बुधबार बिहान साढे साततिर यात्रा अगाडि बढ्यो । दुई घण्टापछि वृन्दावन आइपुग्यौं । भगवान् श्रीकृष्णको मन्दिरको दर्शन भयो । बेस्करी जाडो भए पनि हामीले तीन घण्टासम्म त्यहाँको दृश्यको अवलोकन, दर्शन, भ्रमण गऱ्यौं । छैटौं दिनमा हामी वृन्दावन गोकुलधाममा आइपुग्यौं । यसपछि यात्रा अघि बढ्यो दिल्लीतिर । चार घण्टाको दूरी तय गरेर दिल्ली आइपुगेपछि हामी धर्मशालामा बास बस्यौं । सातौं दिन कुतुवमिनारको दर्शन गर्न गयौं । यहाँबाट बाइसहाउसमा गयौं । यहाँ ध्यान गर्दा अनुभूति हुँदा रहेछन् । यहाँबाट स्वामी नारायण मन्दिर (अक्षयधाम) तिर हुइँकियौं । यहाँबाट लोकल बसबाट इन्दिरा गान्धी, राजीव गान्धीको समाधिस्थल गयौं । यो तीनजनाको समाधिस्थल हो । यसपछि लालकिल्ला हेरियो । लालकिल्ला हुँदै कुरुक्षेत्र पुग्दा रातको दुई बजेको थियो ।

यात्राको आठौं दिनमा कुरुक्षेत्र भ्रमण भयो । यहाँ श्री निखिलेश्वर ानन्द महाराजको मन्दिर पनि रहेको छ । नवौं दिनमा पञ्जाब प्रान्तमा पुग्यौं । यहाँबाट साँझ सवा ६ बजेतिर गुरुधाम जोधपुर आइपुग्यौं । तीर्थयात्राको मुख्य गन्तव्य रहेको यस ठाउँमा आइपुग्दा साह्रै खुशी र आनन्द आयो । पूजनीय गुरुमाताको दर्शनको सौभाग्य प्राप्त भयो । पूज्य अरविन्द गुरुदेवको श्रीचरणमा पुष्पमाला चढाउने कार्यक्रम सम्पन्न भएपछि भजनकीर्तन भयो । सबै रमाइलो र आनन्दित हुने गरी नाच्नुभयो । रातमा त्यहीं बास बसेका थियौं । रातभरि राम्रा राम्रा सपनाहरु देख्यौं ।

गुरुधाम जोधपुरमा परमपूज्य सद्गुरुदेवको जन्मथलो लुनीको दर्शन पनि गरियो । यहाँ गुरुदेवले पढ्नुभएको विद्यालय आदिको दर्शन गऱ्यौं । यसपछि शिविरमा फर्कियौं । शिविरको दोस्रो दिनको दीक्षाको कार्यक्रममा सबैले दीक्षा लिनुभयो । गुरुमातालाई ८४ व्यञ्जनले पूजा गरिएको कार्यक्रममा सहभागी भयौं । माताजीलाई भनेर लगिएका सबै उपहार उहाँलाई सभक्ति अर्पण गऱ्यौं । माताजी र पूज्य अरविन्द गुरुदेवको श्रीचरणकमलमा साधकसाधिकाहरुले पुष्पमाला अर्पण गर्नुभयो ।

तीर्थयात्राको ११ औं दिन माताजीको दर्शन गरी पुष्करधामका लागि प्रस्थान गरियो । स्नान आदि गरेर पुष्कर बाबाको मन्दिरमा दर्शनार्थ पुग्यौं । तीन घण्टा जति पुष्करधाममा बिताएपछि हाम्रो यात्रा अगाडि बढ्यो अयोध्याधामतिर । यो यात्राको बाह्रौं दिन थियो । यहाँबाट यात्राको अन्तिम गन्तव्य भगवान् बुद्धको जन्मस्थल लुम्बिनी आउँदा तीर्थयात्राको तेह्रौं दिन बितिरहेको थियो । बिहान ९ बजे लुम्बिनी आइपुगेपछि दुई घण्टासम्म यहाँ रमायौं, आनन्दित भयौं ।

लुम्बिनीको दर्शन, भ्रमणपछि बस पोखराका लागि प्रस्थान भयो । हामीलाई सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय रामघाटका संयोजक साधक मेघराज बरालले स्वागत गर्नुभयो हामी न्यानो स्वागत पाएर अति नै आनन्दित भयौं ।

जय गुरुदेव !

# अमृत विन्दु

- ❊ संसारमा यस्तो कोही छैन जसमा कुनै दोष नहोस् अथवा जसबाट कहिले पनि गल्ती नहुने हुन्छ। अत: कसैको गल्ती हेरेर उसलाई लज्जित नबनाऊ ।
- ❊ आफ्ना गल्तीहरू हेर्नुहोस् र त्यसलाई सुधार्ने सतत् चेष्टा गर्नुहोस् । अरूलाई हेर्ने हो भने उसलाई उसैको दृष्टिकोणले र उसैको परिस्थितिमा पुगेर हेर्नुहोस् । फेरि उसका गल्तीहरू त्यति देखिँदैन ।
- ❊ हामीले अरूलाई सुधार्नु छ भन्ने कहिल्यै नसोच । पहिले आफ्नो सुधार गर्नुहोस् । तपाईं सुध्रनु भयो भने जगतको एउटा अंग स्वत: सुध्रियो । यसरी सबैले आ-आफ्नो सुधार गर्ने हो भने सम्पूर्ण जगत आफै सुध्रनेछ ।
- ❊ सच्चा कमाइ यो कि उत्तमभन्दा उत्तम सद्‌गुणहरूको विकास। संसारका प्रत्येक प्राणी कुनै न कुनै सद्‌गुणले सम्पन्न छन्। गुण हेरेमा गुण भेटाइनेछ। दोष खोज्ने हो दोष मिल्नेछ। संसारका प्राणीहरूमा दोषै दोष देख्ने दोषको समुद्र बन्न जान्छ।
- ❊ जसको जीवन सुन्दर छ, चिन्तन पवित्र एवं सुन्दर छ, ऊ वास्तवमा सुन्दर हो। तर जसको केवल कुरा मात्रै सुन्दर छ, उसको जीवन कलुषित छ। उसका सुन्दर कुरा उस्तै हो जस्तो विषले भरिएको घडामाथिको दूध ।
- ❊ प्रतिक्षण स्वयंलाई हेर्दै रहने गर। अलिकति पनि दोष देखिन गयो भने त्यसलाई निकाल्ने कोशिस गर्नुहोस् ।
- ❊ जब तिमी साँच्चिकै सुध्रनेछौ तब बिना बोली नै तपाईंको जीवनले जगतलाई प्रेरणा दिनेछ। त्यस्तो अवस्थामा यदि तपाईं एकान्तमै रहनुहुन्छ भने पनि त्यतिबेला पनि तपाईंभित्रका सद्‌गुणको सुवासले जगतलाई सुख र कल्याण प्राप्त हुनेछ ।
- ❊ अरूसित त्यस्तै व्यवहार गर्नुहोस् जस्तो तपाईं अरूबाट आफ्ना लागि चाहनुहुन्छ ।
- ❊ जसरी धनको लोभी चुपचाप धन कमाउन लागिरहन्छ। उसले धनका लागि व्याख्यान दिने गर्दैन । त्यसैगरी चुपचाप दैवी गुणहरूको सम्पत्ति कमाउन लागिरहनुहोस्। न ढोल पिट्नुहोस्, न त ठीक्क पार्नमै जीवन बिताउनुहोस् ।
- ❊ सबैसित प्रेमयुक्त व्यवहार गर्नुहोस्। डर, हप्काइ, छल-कपटबाट त तपाईंले मानिसहरूलाई पराई बनाउनुहुन्छ । यदि पवित्र अन्त:करणबाट सबैसित व्यवहार गर्ने हो भने मानिसहरू आफ्ना हुनेछन् ।
- ❊ याद राख्नुहोस्, जे दिनुहुनेछ, त्यही तपाईंलाई एउटा बीजको रूपमा असङ्ख्य फलजस्तै अति ठूलो परिमाणमा फिर्ता प्राप्त हुनेछ। सुख चाहनुहुन्छ भने सुख दिनुहोस्, प्रेम चाहनुहुन्छ भने प्रेमको दान गर्नुहोस्, हित चाहनुहुन्छ भने सबैको हितको कुरा सोच्नुहोस्, सम्मान चाहनुहुन्छ भने सबैलाई सम्मान गर्नुहोस्, सद्‌गुण चाहनुहुन्छ भने सद्‌गुणको दान दिनुहोस् र संसारमा शान्तिपूर्वक रहेर अन्तमा अनन्त शान्ति प्राप्त गर्न चाहनुहुन्छ भने यस्तो कर्म गर्नुहोस् जसबाट प्रत्येक जीवलाई शान्ति र आनन्द प्राप्त होस् ।

जय गुरुदेव !

**–राजेश गुप्ता निखिल**

# आध्यात्मिक जीवन र

–मनोजराज रेग्मी

हामी तत्त्व र आत्मा दुवैबाट बनेका छौं । आत्मालाई आध्यात्मिक चिन्तन, ज्ञान र प्रकाशको आवश्यकता पर्दछ भने शरीर (तत्त्व) लाई केही भौतिक चीजहरूको आवश्यकता पर्दछ र हाम्रो आत्माको पोषण चाहिँ अध्यात्मद्वारा हुन्छ। आध्यात्म बिना जीवन जिउन सकिन्न । के तपाईं शान्ति चाहनुहुन्छ ? के तपाई खुशी चाहनुहुन्छ ? के तपाईं सुख चाहनुहुन्छ ? के यी सब चाहना र इच्छाहरू बाहिरी चीज अथवा भौतिक चीजहरूको प्राप्तिबाट सम्भव छ ? यदि त्यसो हो भने धनी व्यक्तिहरू संसारका सबैभन्दा बढी खुशी र सुखी हुन्थे होलान् । तर यथार्थमा त्यसो भएको पाइँदैन । धनद्वारा तपाईंले सुख-सयलका सामग्रीहरू किन्न सक्नुहुन्छ, तर सन्तोष किन्न सक्नुहुन्न, सुत्नको लागि राम्रा राम्रा डसनाहरू किन्न सक्नुहुन्छ, निद्रा किन्न सक्नुहुन्न, औषधी किन्न सक्नुहुन्छ, स्वास्थ्य किन्न सक्नुहुन्न, सौन्दर्यका सामग्रीहरू किन्न सक्नुहुन्छ, सौन्दर्य किन्न सक्नुहुन्न, मनको शान्ति किन्न सक्नुहुन्न, खाद्य सामग्री किन्न सक्नुहुन्छ, भोक किन्न सक्नुहुन्न, प्रेम, आदर, मित्रता, त्याग, सहिष्णुता, सौहार्द्रता केही किन्न सक्नुहुन्न । ख्याति किन्न सक्नुहोला तर सम्मान किन्न सक्नुहुन्न । जन्मेदेखि हामीलाई विभिन्न भौतिक कुराहरूको पछाडि भाग्न सिकाइन्छ, हामी जिन्दगीभर भागिरहन्छौं । तर हामीलाई म को हुँ ? यस धर्तीमा मेरो जन्म किन भएको हो ? मेरो सनातन धर्म के हो ? मेरो अस्तित्व के हो ? त्यो कसैले सिकाउँदैन ।

यसो विचार गर्नुस् त जीवनको अन्तिम सत्य के हो ? मृत्यु ? तर्कगत हिसाबले सोच्दा एकदिन मर्ने हो भने जीवनको महत्त्व, अभिप्राय, सार्थकता के हो त ? के साँझ, बिहान खाना खानु, लगाउनु, मोजमस्ती गर्नु, सुख-सयलका साथ जीवन बिताउनु मात्रै जीवनको सार्थकता हो कि जीवनको अर्थ केही अर्कै छ । हाम्रा धर्मग्रन्थ, साधुसन्त तथा हजारौं वर्ष तपस्या तथा अध्ययन गरेर बसेका ऋषिमुनिहरूका अनुसार हाम्रो यथार्थ स्वरूप भनेको आत्मा हो, यसको न जन्म हुन्छ, न मरण हुन्छ । यो अजर अमर छ, यो कालातीत छ, यो अनन्त छ, यो अजन्मा छ । तर हामीले विगत जीवनमा गरेका कर्मको धुवांले त्यो आत्मारूपी ऐनालाई ढाकिदिएको छ, हामीलाई भ्रमित गराएको छ । फलत: हामीलाई संसारका चकाचौंधमा आफ्नो यथार्थ स्वरूप आत्मालाई बिर्सी भुलाउन बाध्य बनाएको छ । जब मन, वचन, कर्मले हामी पवित्र हुन्छौं तब त्यस धुवांलाई हामीले हटाउन सक्छौं र हामीलाई आत्माको बोध हुनुको साथै परमात्माको पनि बोध हुन पुग्छ जुन अवस्थामा हामी आनन्द, सन्तोष र आत्मतृप्तिको पराकाष्ठामा पुग्दछौं ।

ऋध्यात्मलाई विभिन्न रूपमा व्याख्या गरिएको पाइन्छ । कसैले यसलाई यस सम्पूर्ण विश्व ब्रह्माण्डलाई संचालन गर्ने सर्वशक्तिमान परमात्माप्रतिको विश्वास हो भन्दछन् भने कसैले कुनै खास धर्मले प्रतिपादित गरेका निश्चित नियम र कानुनको अनुसरण गरेर एउटा अनुशासित जीवन बिताउनुलाई भन्दछन् । त्यसैगरी कसैले सम्पूर्ण जीव-जातिसँग एउटा अन्तर्सम्बन्ध कायम गरी दया, करुणा, भाइचारा, आपसी सद्भाव, क्षमा आदि सद्गुणहरूलाई अङ्गाली जीवन बिताउनुलाई भन्दछन् । तर अहिले आएर धर्मको एउटा निश्चित परिधि तथा यसले एउटा विशेष मान्यता तथा विश्वासलाई महत्त्व दिने भएकोले नयाँ पिँढीका सन्त तथा आध्यात्मको वकालत गर्ने व्यक्तिहरूले आध्यात्मिकतालाई धर्मदेखि अछुतो राखेर हेर्नुपर्ने महत्त्वमाथि जोड दिन थालेका छन् । धर्मले टुक्र्याउँदछ, आध्यात्मले जोड्दछ भन्ने नयाँ मान्यताहरू पनि अगाडि आइरहेका छन् । धर्मले गुटबन्दी, समूहको संगठन, सम्प्रदायको उद्गमन, अन्धविश्वासको निरन्तरतालाई जोड दिन पृष्ठपोषण गर्न सक्छ भने आध्यात्मले केवल व्यक्तिको वैयक्तिक चेतनाको उच्च विकासलाई जोड दिन्छ । एउटा आध्यात्मिक व्यक्तिलाई चारवटा विभिन्न धर्मबाट चार किसिमका सदाचार, मानवकल्याण, विश्वप्रेम र सबै व्यक्तिलाई समान व्यवहार गर्ने जस्ता मानवीय मूल्य र भावनालाई अंगीकार गर्नमा कुनै समस्या हुँदैन भने एक धार्मिक व्यक्तिले सम्पूर्ण कुरा आफ्नो धर्मग्रन्थको परिधिभित्र खोज्न थाल्दछ र आफ्नो निश्चित धर्मग्रन्थलाई नै सर्वस्व ठान्दछ । तर समय सापेक्ष छ, संसार परिवर्तनशील छ । अहिले विज्ञानको विकासले निकै ठूलो फड्को मारिसकेको छ । धर्मग्रन्थमा लेखिएका कुराहरू पनि

बुझ्न नसकिने भइसकेका छन् । जे होस् हामीले आफूलाई आफ्नो चेतनाको उच्च विकासतर्फ डोऱ्याउनु र तदनुरूप आफूले जानेका, अनुभव गरेका र आत्मसात गरेको ज्ञानलाई व्यवहारमा उतार्नु नै सर्वोत्कृष्ट ठहरिन्छ ।

हामी सबैलाई थाहा छ– जीवनमा विभिन्न कुराहरू सिक्नको लागि गुरु वा शिक्षक वा टिचरको आवश्यकता पर्दछ । बालक जन्मेपछि उसले कतिपय कुराहरू आमा र बुबाबाट सिक्दछ भने उसले तोतेबोली बोल्नेदेखि लिएर प्रष्ट बोल्नेसम्मको अवस्थासम्म आउन परिवारका अन्य सदस्यलगायत समाजबाट धेरै कुराहरू सिक्दछ । भनिन्छ परिवार व्यक्तिको पहिलो पाठशाला हो र परिवारका सदस्यहरू उसका गुरुहरू हुन् । गुरु परम्परा हिन्दु संस्कृतिमा भनौं वा पूर्वीय देशहरूमा धेरै पहिलेदेखि आएको हो । भगवान् श्रीकृष्णका गुरु सान्दिपन ऋषि हुनुहुन्थ्यो भने भगवान् श्रीरामका गुरु वशिष्ठ हुनुहुन्थ्यो । त्यसैगरी आध्यात्मिक व्यक्तित्वहरू जस्तै स्वामी विवेकानन्दका गुरु रामकृष्ण परमहंस हुनुहुन्थ्यो भने परमहंस योगी योगानन्दका गुरु श्री युक्तेश्वर हुनुहुन्थ्यो । आध्यात्मिक यात्रा आफ्नो आन्तरिक यात्रा भएको हुनाले यस यात्रासम्बन्धी ज्ञान प्राप्त भएका गुरुहरूले मार्गदर्शन गरेमा यात्रा सहज हुन्छ । आध्यात्मिक भनेको एउटा पंक्षी आकाशमा उड्नु जस्तै हो जहाँ अगाडि यात्रा गरेका महात्माहरूको पाइलाको दर्शन गर्न पाइदैन तर एउटा सच्चा गुरुको साथ पाइयो भने गुरुले शिष्यको आध्यात्मिक यात्रामा उसको यात्रा कहाँसम्म भएको छ, उसलाई कस्तो मार्गदर्शन गर्नुपर्नेछ आदि कुरा दृश्य तथा अदृश्य सूक्ष्म रूपले मार्गदर्शन गर्नुहुन्छ । गुरुको महिमाको बारेमा एउटा संस्कृतको श्लोक हामी सबैलाई थाहा छ,

**गुरुर्बह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः ।**

**गुरुः साक्षात् परब्रह्म तस्मै श्री गुरवे नमः ।।**

अर्थात् गुरु ब्रह्मा, विष्णु र महेश्वरका सच्चा प्रतिनिधि हुनुहुन्छ । गुरुले ज्ञानको ज्योति जलाउनुहुन्छ, ज्ञानले सिंचित गर्नुहुन्छ र शिष्यमा रहेको अज्ञानको सम्पूर्ण अज्ञानतालाई नष्ट गर्नुहुन्छ । गुरुको महिमाबारे अमृत महोत्सवमा सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले भन्नुभएको छ– जुन गुरुले आफूलाई शिष्यमा पूर्ण रूपमा समाहित गर्दछ, न्यौछ्यावर गर्दछ त्यो नै सच्चा गुरु हो । गुरु हो भन्दैमा चाँदीको उच्च आसनमा बस्नु आवश्यक छैन, एक अर्थमा गुरु शिष्यमा र शिष्य गुरुमा नै जिउँदछन् । उहाँ अगाडि भन्नुहुन्छ– गुरु भनेको गुलाफको फूलजस्तै हो । गुलाफको फूलको वासना सम्पूर्ण वातावरणमा व्याप्त हुन्छ तर गुलाफको फूलमा हुँदैन । गुलाफको फूल भनेको फूलको गुच्छा होइन, वासनासहितको पूरा अस्तित्व हो । त्यसैगरी उहाँले आफूले डा. नारायणदत्त श्रीमाली स्वरूपमा मानिसहरूलाई दिएको ज्ञान, अनुभव, मार्गदर्शन, आपसी सद्भाव आदिको समष्टि रूप नै गुरु रूप हो भनी स्पष्ट पार्नुभएको छ ।

अध्यात्म यात्रामा गुरुको साथ पाइयो भने राम्रो अवश्य हुन्छ तर हामी सबैले यो अवसर पाउँछौ नै भन्ने पनि छैन । के गुरुको साथ विना हाम्रो आध्यात्म यात्रा रोकिन्छ त ? त्यो अवश्य होइन । विगतमा यस संसारमा जन्म लिएर आफ्नो नश्वर शरीर छोडेर जानु भएका कैयौं दिव्य व्यक्तिहरूको बारेमा हामीले आफ्नो जीवनमा सुनेका हुन्छौं । दिव्य व्यक्तित्वहरूको आत्माको तरंग यस संसारमा हजारौं वर्षसम्म पनि जीवित रूपमा रहिरहेको हुन्छ, त्यो कुनै सांसारीक मोह वा वासनाको कारणले होइन । दिव्यात्माहरू यस संसारमा मानिसहरूको दुःख दुर गर्नको लागि करुणावश अवतरित हुनुभएको हो । के शिर्दी साईबाबा, सत्य साईबाबा, भगवान् श्रीराम, भगवान् श्रीकृष्ण, परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलगायत अन्य दिव्यात्माहरूको अवतरणको पछाडि साधारण मानिसको जस्तै वासना वा अतृप्त इच्छा कारण थियो होला त ? अवश्य पनि थिएन, उनीहरू त मानवकल्याणको लागि जन्मिनु भएको हो । हामीले यदि सशरीर कुनै गुरुको दर्शन गर्न पाएनौं भने हामीलाई आस्था भएको जुनसुकै दिव्यात्मालाई पनि गुरु बनाउन सक्छौं । जस्तो कि शिर्दी साइबाबाले दिनुभएको ११ वचनमा उहाँले भन्नुभएको छ जो कोहीले उहाँलाई सम्झन्छ भने उहाँको साथ पाउँछ र ऊ दुःख कष्टबाट दुर हुन्छ । त्यहीअनुरूप उहाँले भक्तहरूलाई दर्शन दिनेदेखि लिएर उनीहरूको दुःख दुर गर्ने काम गर्दै आउनुभएको छ । त्यसैगरी सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले पनि उहाँका भक्तहरूलाई आफ्नो नश्वर शरीर छोडेर गइसकेपछि पनि अदृश्य र सूक्ष्म रूपमा र आवश्यक परे सशरीर प्रकट भएर पनि मार्गदर्शन गर्दै आउनुभएको हामी सबैलाई थाहा छ ।

अध्यात्मजीवन बिताउनुको मतलब हामीले जीवनमा भोग्ने सुख, दुःख, उतार र चढावको मालिक बन्नु हो अर्थात् यी सबै कुराहरू र परिघटनाहरूप्रति अछुतो भई साक्षीभावले हेर्दै जीवनको सर्वोत्कृष्ट चिन्तन र त्यहीअनुरूप आफूलाई शुद्धिकरणको मार्गतर्फ अगाडि अग्रसर गराउनु हो । जस्तो उदाहरणको लागि हामी सबैले श्वास फेर्दछौं । अब एकछिन हामी श्वास फेर्ने प्रक्रियालाई साक्षी भावले हेरौं । श्वास भित्र जान्छ, बाहिर आउँछ, श्वास भित्र जाँदा हामीलाई राग र द्वेष केही हुँदैन र त्यसैगरी श्वास बाहिर आउँदा

पनि हामीलाई राग र द्वेष केही हुँदैन किनकि हामीलाई यो थाहा छ यो जीवनको सबैभन्दा ठूलो साधारण प्रक्रिया हो । यसबाट हामीले के बुझ्नु पर्दछ भने जीवनका सुखदु:खका क्षणहरू पनि हाम्रो श्वासजस्तै प्रक्रिया हुन्, यसमाथि आसक्ति राख्नु वा घृणा गर्नु श्वासको प्रक्रियामाथि आसक्ति राख्नु वा घृणा गर्नु जस्तै हास्यास्पद कुरा हो । यस गुह्य रहस्यलाई हामीले राम्रोसँग बुझ्नु जरुरी छ । हामीले जीवनमा भगवान् श्रीकृष्णले गीतामा भन्नु भएजस्तै अनासक्त कर्म गर्नु जरुरी छ किनकि कर्ममा हाम्रो अधिकार भए पनि फलमा हाम्रो अधिकार छैन, हामी फलमा आसक्त नभई, फलको बारेमा चिन्ता नगरी कर्ममा तल्लीन भएर कार्य गर्‍यौं भने हाम्रो फल पनि अवश्यमेव राम्रै हुन्छ, यसमा कसैको दुईमत हुन सक्दैन । अध्यात्मले हामी स्वयंमाथि दृष्टि राख्न, ध्यान राख्न सिकाउँछ । पृथ्वीको यथार्थ स्वरूप हेर्न जसरी वैज्ञानिकहरूले भू-उपग्रहको प्रयोग गरी हजारौं मिलमाथिबाट दृष्टि राख्दछन्, त्यसैगरी हामीले आफूभन्दा माथि उठेर आफ्ना कमी-कमजोरी र आफ्नो स्वरूप, अस्तित्वमाथि दृष्टि राखेर आफ्नो यथार्थ अवस्थाको ज्ञात गरी त्यो भन्दा माथि उठ्न अगाडि बढ्नु नै आध्यात्मिक यात्रा हो ।

वास्तवमा जीवनमा सुख, दु:ख, आनन्द, आत्मविश्वास, शान्ति, सौन्दर्यता, सन्तोष आदि कुराहरू बाह्य वस्तुको प्राप्तिबाट हुँदैन । यो कुरालाई आध्यात्मिक व्यक्तित्वहरूलगायत सकारात्मक चिन्तनको वकालत गर्ने एन्थोनी रोबिन्स, स्वेट मार्डन, नोर्मेन भिन्सेट पिललगायत धेरैले स्वीकारी सकेका छन् । यस कुरालाई हामीले पनि सजिलै महसुस गर्न सक्छौं । हामीलाई पीडा भएको बेला, हामीलाई कुनै चिन्ता परेको बेला, हामीलाई शोक परेको बेला हामीलाई जतिसुकै सुखद समाचार, मीठो परिकार, सुन्दर चीजले पनि हामीलाई खुशी गराउन सक्दैन किनकि सुख, शान्ति र आनन्दको बीज रूप हाम्रो मन, हाम्रो मस्तिष्क एक हिसाबले भन्दा बिरामी भएको हुन्छ । तर जब हामी प्रसन्न भएको बेला हावाको सरसराहट, भँगेराको चिरबीर, कोइलीको कुहुकुहु, पुतलीको नाचले पनि हामीलाई पुलकित गराउँछ, प्रसन्न गराउँछ, आनन्दले झङ्कृत गराउँछ । अत: जीवनको सार्थकता, यसको महिमा र सुख-शान्तिको मूल स्वरूपलाई बुझ्न, महसुस गर्न र ज्ञात गर्न आध्यात्मिक जीवनको यात्रातर्फ कदम बढाऔं जसबाट समस्त मानवजातिको हित हुनुको साथै हामीले यो दु:खमय संसारबाट मोक्ष प्राप्त गर्न सक्छौं ।

जय गुरुदेव !

# बिहानीपख सुत्नु राम्रो होइन

आध्यात्मिक तथा वैज्ञानिक दुवै दृष्टिकोणले बिहानीपख सुत्नु राम्रो हुँदैन । बूढापाकाहरूको भनाइ छ– बेलुकी (राति) जागे, हिँडे भूत-प्रेत, मसान, किचकन्या, राक्षस आदिसँग भेट हुन्छ तर बिहानीपख जागे, हिँडे देवीदेवता, ऋषिमुनि, परीहरूसँगसँग भेट हुन सक्छ । राति हिँडे भय र दु:ख हुन्छ, बिहान सबेरै हिँडे आशीर्वाद र दैवी सहयोग पाइन्छ । वैज्ञानिक दृष्टिले पनि बेलुकी र रातिको समयभन्दा बिहानीपखको समय बढी ऊर्जायुक्त र स्वस्थकर मानिन्छ ।

परमपूज्य सद्गुरुदेवहरूले भन्नुभएको छ–

**पहला प्रहर मे सब कोइ जागे, दूसरे प्रहर मे भोगी,**
**तिसरे प्रहर मे जागे तस्कर, चौथे प्रहर में योगी ।**

हुन पनि हो रातको पहिलो प्रहरमा (६–९ बजे) बजे सबै मानिस जागा रहन्छन् । लेखपढ, खानपान र गफगाफको समय हो यो । रातको दोस्रो प्रहर (९–१२ बजे) मा भने सर्वसाधारण मानिस सबै सुतिसकेका हुन्छन् । भट्टी, होटलमा रंगीचंगी खानपानमा भुल्ने, वार र रेष्टुरेण्टमा नसाले झुम्म परेर सुरा-सुन्दरीमा लठ्ठ पर्ने, नाच्ने, गाउने तथा नवदम्पत्तिको रोमान्सको समय हो दोस्रो प्रहर । तेस्रो प्रहर (१२–३ बजे) गृहस्थ, भोगी, योगी सबै निद्रादेवीको सुखद काखमा सुतिरहेका हुन्छन् । उनीहरूको बाहिरी संसारसँग सम्बन्ध र सम्पर्क बिच्छेद हुन्छ । तर तस्कर, चोर, डाँका भने आफ्नो कालो धन्दामा व्यस्त हुन्छन् । अरू सबै मानिस सुतेका बेलाको फाइदा तस्करले उठाउन खोज्छन् ।

रातको दोस्रो र तेस्रो प्रहरमा जाग्नेले खासै उन्नति गर्न सक्दैन । उसको न अध्यात्मप्रति चासो देखिन्छ, न त भौतिक उन्नतिको आडमा कमाइने इज्जत र प्रतिष्ठाप्रति । तर रातको चौथो प्रहर (३–६ बजे) सबै दृष्टिले राम्रो समय हो जसलाई 'ब्रह्ममुहूर्त' भन्ने गरिन्छ । यतिबेला योगी, शिष्य र साधकहरू सबै जागेका हुन्छन् । उनीहरू यो समयमा जप, ध्यान, योग, तपस्या र लेखपढमा संलग्न हुन्छन्, साथै बिहानी सफरमा सामेल हुन्छन् । यतिबेला देवीदेवता, ऋषिमुनिहरू पनि आफ्नो नैमित्तिक कार्य सकेर भ्रमणमा निस्कनु हुन्छ रे । उहाँहरूसँग प्रत्यक्ष, अप्रत्यक्ष रूपमा भेट हुँदा आध्यात्मिक र साथै भौतिक उन्नतिमा बिहानीपखको समय बढी लाभदायक हुन्छ । झन लेखपढ गर्नेहरूलाई त उत्तम समय हो ब्रह्ममुहूर्त ।

तर हामी निकै अल्छी छौं । बिहान सबेरै उठेर घुमफिर गर्नु, लेखपढ र जप-ध्यान गर्नु त परै जाओस्, घाम झुल्कुन्जेलसम्म पनि ओछ्यान नछोड्ने बानी छ हाम्रो । यस्तो बानीले हामीमा न आध्यात्मिक सुधार आउँछ, न त भौतिक ।

परमपूज्य सद्गुरुदेवहरूले दिनुभएको सन्देशलाई हृदयंगम गर्न सकियो भने हामीलाई सबै दृष्टिले लाभै-लाभ हुन्छ । बिहानको ब्रह्ममुहूर्त सन्त, योगी र साधकका लागि मात्र होइन, विद्यार्थी, शिक्षक, व्यापारी, कर्मचारी, यात्री, सर्वसाधारण र भोगीलाई समेत लाभदायक छ । सबैले यस समयको राम्ररी सेवन गर्न जानियो भने हामीलाई दुवै हातमा लड्डु मिल्नेछ अर्थात् बालबच्चाको भाषामा चिचि पनि पापा पनि हुनेछ । जय गुरुदेव !

# हार्दिक आमन्त्रण !

**सिद्धाश्रम शक्ति केन्द्र तथा स्थानीय बासिन्दाको सहभागितामा**
**आश्रम भवन एवं गुरु गोरखनाथको मूर्ति स्थापनार्थ**
**पं. श्रीरामकृष्ण शर्माद्वारा वाचन हुने**

# श्रीमद्भागवत ज्ञान महायज्ञ

अन्य विशेष कार्यक्रमका साथ सम्पन्न हुन गइरहेको हुनाले
उक्त कार्यक्रममा सहभागी हुनु भई
पितृ उद्धार एवं पुण्य आर्जन गर्नुहुन
सम्पूर्ण श्रद्धालु, भक्तजनहरुमा
हार्दिक अनुरोध गर्दछौँ ।

मिति : २०७० वैशाख १ गते कलश यात्रा ।
कलश यात्राका लागि अग्रिम नाम लेखाउनुहोला ।

गुरु आश्रम निर्माणमा सहयोग गरौं
दान गरौं पूण्य कमाऔं ।
यस पुनीत कार्यमा नगद तथा जिन्सी
सहयोग गर्न सकिनेछ ।
सहयोग गर्न आश्रममा
सम्पर्क राख्नुहुन वा
जनता बैंकको
खाता नं. ००११०२००५८३५५०१
मा नगद जम्मा
गर्न सक्नुहुनेछ ।
भवन निर्माण उपसमिति
सिद्धाश्रम शक्ति केन्द्र
सम्पर्कः
बसुन्धरा, काठमाडौं, फोनः २१००१५३
मोः ९७४११५३६९६, ९८५१०४८२७४, ९८५१०३६११७

# महिनाका एकादशी व्रतहरु

## विजया एकादशी व्रतकथा
## (फाल्गुण कृष्णपक्ष)

भगवान् श्रीकृष्ण युधिष्ठिरलाई आज्ञा गर्नुहुन्छ– "हे पार्थ ! तिमीले जिज्ञासा राखेको फाल्गुण महिनाको कृष्णपक्षमा 'विजया' नामको एकादशी हुन्छ। सम्पूर्ण पापको नाश गरी विजय प्राप्त हुने यस एकादशीको बारेमा अघि ब्रह्माजीले नारदलाई बताउनुभएको थियो । ब्रह्माजी नारदलाई आज्ञा गर्नुहुन्छ- 'हे नारद ! सम्पूर्ण पापको नाश गरी विजय प्रदान गर्ने 'विजया' एकादशीको प्राचीन कथा सुनाउँछु, ध्यानपूर्वक सुन । भगवान् श्री रामचन्द्र पत्नी सीता र भाइ लक्ष्मणलाई साथ लिई चौध वर्षको निमित्त वनबास जानुभयो । वनबासको क्रममा पञ्चवटी नामक घोर जङ्गलमा गई बस्नुभएको थियो । एकदिन माता सीता मात्र हुनुभएको मौका छोपेर छल गरी रावणले पतिव्रता सीताजीलाई अपहरण गऱ्यो । पत्नी बिछोडको व्याकुलताले भगवान् श्रीराम जङ्गलमा भट्कन लाग्नुभएको अवस्थामा एक अर्धमृत जटायुलाई देख्नुभयो । त्यसपछि कवन्ध नामक राक्षसको संहार गर्नुभयो । अर्धमृत जटायुले सीताको अपहरण बारेको सम्पूर्ण कुरा श्रीरामलाई बताएर प्राण त्याग गऱ्यो । सीताजीलाई फर्काउने उपायको सोच गर्दै श्रीराम यत्रतत्र घुमिरहनुभएको अवस्थामा सुग्रीवसँग उहाँको मित्रता हुन पुग्यो । श्रीरामको सहयोगको लागि सुग्रीवले वानर सेना एकत्रित गरिदिए । हनुमान्जी लङ्का गई सीताजीको खोजी गर्नुभयो । यसै क्रममा लङ्कास्थित अशोक वाटिका उद्यानमा ज्यादै दु:खी अवस्थामा माता सीता रहनुभएको देखेर माता सीतासमक्ष हनुमानजी उपस्थित भई पहिचानस्वरूप श्रीरामले दिनुभएको औंठी चढाउनुभयो । सबै हालखबरको जानकारी लिएर लङ्का दाह गरी उहाँ फर्कनुभयो । त्यसपछि हनुमान्जीबाट सीताजीको बारेमा सबै खबर यकिन गरी वानर सेना साथमा लिई श्रीराम लङ्कातर्फ प्रस्थान गर्नुभयो । लङ्का पुग्नुअघि विशाल समुद्र पार गर्नुपर्दथ्यो । महाभयानक त्यस समुद्रको किनारमा पुगेपछि श्रीराम रनभुल्लमा पर्नुभयो । त्यस समुद्र पार गर्न उहाँलाई कुनै पनि सोच आउन सकेन । चिन्तित हुँदै श्रीराम भाइ लक्ष्मणसँग भन्नुहुन्छ- 'हे सुमित्रानन्दन ! महाभयानक समुद्री जीवहरूले भरिएको यो अगाध समुद्र कसरी तर्न सकिन्छ ? म केही उपाय सोच्न सकिरहेको छैन ।' तब लक्ष्मणजी श्रीरामलाई बिन्ती गर्नुहुन्छ- 'हे भगवान् ! आदिदेव, पुराणपुरुष, पुरुषोत्तम हजूर स्वयं हुनुहुन्छ । हजूरको दृष्टिमा के कुरा लुकेको हुन्छ र ? यस टापुको बीचमा वकदाल्भ्य नाम गरेका मुनि निवास गर्नुहुन्छ । हे राघव ! यस ठाउँबाट दुई कोष पर उहाँको आश्रम छ । हे रघुनन्दन ! उहाँले धेरै ब्रह्मा देखिसक्नुभएको छ । त्यहीँ गएर ती मुनिवरसँग सोधेमा अवश्य समस्याको समाधान हुनेछ ।'

लक्ष्मणको कुराबाट श्रीराम प्रसन्न हुनुभई मुनिको आश्रममा पुग्नुभयो । वकदाल्भ्य मुनिको सामु पुगी श्रीरामले शिर झुकाई मुनिवरलाई प्रणाम गर्नुभयो । मुनिवरले श्रीरामलाई चिनिसक्नुभएको थियो । प्रसन्न हुँदै मुनिवर प्रश्न गर्नुहुन्छ- 'हे राम ! तपाईं कसरी, किन यहाँ आउनुभयो ?' श्रीराम भन्नुहुन्छ- 'हे मुनिवर ! हजूरको कृपाले राक्षससहित लङ्कामाथि विजय प्राप्त गर्न सेना साथ लिई यस समुद्रको किनारमा आएको हुँ । हे मुनिवर ! कृपा गरी समुद्र पार गर्ने उपाय बताइदिनुभई ममाथि दया गर्नुहवस् ।' मुनिवर भन्नुहुन्छ- 'हे राम ! व्रतमा अति उत्तम व्रत म तपाईंलाई बताउँछु । एकचित्त भई विधिपूर्वक त्यो व्रत सम्पन्न गर्नुभयो भने कुनै पनि बाधा र व्यवधान बिना नै समुद्र पार गरेर सारा राक्षससहित लङ्कामाथि विजय प्राप्त गरी कहिल्यै नमेटिने महान् कीर्तिसमेत प्राप्त गर्नुहुनेछ । हे राम ! फाल्गुण कृष्णपक्षको 'विजया एकादशी नजिकै आइरहेछ । एकचित्त भएर भक्ति र विधिपूर्वक त्यस 'विजया' एकादशीको व्रत सम्पन्न गर्नुहोस् भनी मुनिवरले व्रत विधि बताइदिनुभयो ।

मुनिवरको आज्ञाअनुसार विधिपूर्वक फाल्गुण कृष्णपक्षको 'विजया' एकादशी व्रत विधिपूर्वक सम्पन्न गरी रघुनन्दन श्रीरामले लङ्का विजय गर्नुभयो । ब्रह्माजी आज्ञा गर्नुहुन्छ- 'हे नारद ! 'विजया' एकादशीको व्रत अवश्य गर्नुपर्छ । 'विजया' एकादशीको कथा सुन्नाले वा पढ्नाले मात्र पनि वाजपेय यज्ञको फल बराबरको पुण्य प्राप्त हुन्छ ।'"

## आमलकी एकादशी व्रतकथा
## (फल्गुन शुक्लपक्ष)

युधिष्ठिर बिन्ती गर्नुहुन्छ– "हे केशव ! अब कृपा गरी फाल्गुण शुक्लपक्षको एकादशीको बारेमा बताई ममाथि दया गर्नुहवस् ।" तब भगवान् श्रीकृष्ण आज्ञा गर्नुहुन्छ– "हे राजन् ! फाल्गुण शुक्लपक्षमा अति पवित्र विष्णुलोकको पुण्य प्राप्त हुने 'आमलकी' नामको एकादशी हुन्छ जसको बारेमा अघि राजा मान्धातालाई महात्मा वशिष्ठले बताउनुभएको थियो । वशिष्ठ भन्नुहुन्छ- 'हे मान्धाता ! अघि कुनै समयमा ब्राह्मण, क्षेत्रीय, वैश्य, शूद्र चारै वर्णका हृष्टपुष्ट स्वस्थ

जनताले सुशोभित 'वैदिश' नामक नगर थियो । त्यहाँ सदासर्वदा वेद ध्वनि गुञ्जिरहन्थ्यो । नास्तिक, कुकर्म गर्ने कोही थिएन । त्यस नगरमा अघि सोमवंशी शशविन्दु नामका विख्यात् राजा थिए । पछि उनैका वंशका सत्यवादी तथा धर्मात्मा चैत्ररथ नामका व्यक्ति राजा भए । ती राजा दश हजार मत्ता हात्तीको बल बराबर शस्त्रास्त्रले पारंगत ऐश्वर्यशाली थिए । त्यहाँ कोही पनि निर्धन र कञ्जुस थिएनन् । त्यहाँका जनता विष्णुभक्तिमा लीन थिए । कतिपय जनता शिवजीको पूजा गर्दथे । राजा स्वयं पनि पूजापाठमा नै लीन भइरहन्थे । एकादशीका दिन जनताहरू कामधन्दा छोडेर हरिको भक्तिमा रही उपवास बस्दथे । यसप्रकार धेरै वर्ष बित्यो । यस्तैमा फाल्गुण शुक्लपक्षको 'आमलकी' एकादशी आयो । ठूलो फल दिने एकादशी हो भन्ने जानेर बालकदेखि वृद्धसम्म सबै उपवास बसी नदीमा स्नान गरी त्यहीँ नदीतटमा रहेको अमलाको रूख भएको मन्दिरमा राजा प्रजा साथै बसी छाता, जुत्ता सहितको पूर्ण कलश थापेर ब्रह्माबाट उत्पन्न भएकी, भगवान् श्रीरामबाट समेत पूजिएकी हे 'आमलकी' एकादशी ! भनी नाना प्रकारका सामग्री चढाई नाना स्तुति गरी पूजा गर्दै रातभर जाग्राममा रहेका थिए ।

हे मान्धाता ! यस्तैमा त्यहाँ सारा जङ्गली जीवजन्तु मारी भक्ष गर्ने, सारा धर्मबाट बहिष्कृत एउटा पापी व्याधा आइपुग्यो । ऊ भोक, प्यास र थकाइले व्याकुल थियो । 'आमलकी'को जागरण गरी बत्तीहरू जगमगाएको त्यो ठाउँ देखेर ऊ त्यहीँ थचक्क बस्यो । क्या हो ? भनी उसले नियाली-नियाली हेर्दा पूर्णकलश, दामोदर भगवान्, अमलाको रूख सबैको दर्शन गर्न पायो । नाना स्तुति गरी मानिसहरू पढिरहेकाले भगवान् श्रीविष्णुको कथा र आमलकी एकादशी व्रतकथा पनि श्रवण गऱ्यो । ऊ अघिल्लै दिनदेखि केही खान नपाएकोले निराहार पनि थियो । भजन, कीर्तन, कथा, झिलिमिली बत्तीलाई आश्चर्यचकित भई हेर्दै, सुन्दै जागै रात छर्लङ्ग बितायो । उज्यालो भएपछि सबै राजा, प्रजा आ-आफ्नो गन्तव्यतर्फ गए । त्यो व्याधा पनि प्रसन्न मुद्रामा आफ्नो घरमा गई भोजन गऱ्यो । समय बित्दै गयो र केही वर्षपछि उसको मृत्यु भयो ।

हे नृपश्रेष्ठ मान्धाता ! त्यस व्याधाबाट अञ्जानमा नै एकादशी व्रतको पालन हुन गयो । 'आमलकी' एकादशीको व्रतका प्रभावले अर्को जन्ममा त्यो व्याधाले चतुरंगिणी सेनाले युक्त ठूलो राज्य भोग गर्न पायो । उसले प्राप्त गरेको राज्यको नाम 'जयन्ती' नगर थियो । त्यहाँ ऊ विदुरथ राजाको हैसियतले राज्य गर्दथ्यो । राजा विदुरथको वसुरथ नामको छोरो थियो । वसुरथ ज्यादै धार्मिक, पराक्रमी र शक्तिशाली भई चतुरंगिणी सेना र धनधान्यले युक्त प्रतापी राजा बन्यो । उसले दशहजार गाउँले भरिएको नगरमा शासन गर्दथ्यो । ऊ साँचो बोल्ने, धर्मात्मा, विष्णुभक्त, दानशील, प्रजापालक राजा थियो । एकदिन शिकार खेल्न जङ्गलमा गएको बखत बाटो बिराएर घुम्दा-घुम्दा भोक र प्यासले थकित भई एक ठाउँमा थचक्क बसिरहेको थियो । यस्तैमा पहाडको गुफामा बस्ने म्लेच्छहरू आइपुगे । राजाले शत्रुवत् व्यवहार गरी सताइएका ती म्लेच्छहरूले राजालाई चारैतर्फबाट घेरी हाम्रा कट्टर शत्रु यस राजालाई मार भन्न थाले । यसले हाम्रा पिता, छोरा, दाजुभाइ आदिलाई मारेको छ, कतिलाई घरबारविहीन बनाइदिएको छ । त्यसकारण यसलाई लौ छिटो मारौँ भनी म्लेच्छहरूले राजाउपर आ-आफ्ना सबै प्रकारका शस्त्रहरू प्रहार गरे तर कुनै पनि शस्त्रले राजालाई असर नगरी शस्त्रहरू प्रभावहीन भए । म्लेच्छहरू उभिएको ठाउँबाट हलचल गर्न सकेनन्, सबै लट्ठिन लागे, शस्त्रहरू त्यसै नष्ट भए । यस्तैमा ती राजाको शरीरबाट अत्यन्त सुन्दरी, सुगन्धित वासनाले युक्त, अमूल्य आभूषण र पहिरनले सुशोभित कन्या उत्पन्न भइन् । ती कन्याले मुखबाट आगो ओकल्दै, मेघ गर्जेझैं गर्जदैं कालरात्रिझैँ रूप धारण गरी हातमा चक्र घुमाउँदै म्लेच्छहरूलाई चक्र प्रहार गरी संहार गरिदिइन् । बेहोश रहेका राजा ब्यूँझिए र मरेका म्लेच्छहरूलाई देखी आश्चर्यचकित हुँदै हाम्रा वैरी यी म्लेच्छहरूलाई कसले माऱ्यो ? हाम्रो हित चाहने को रहेछ भन्ने सोचमा परे । त्यसै बखत 'केशव भगवान्'भन्दा दोस्रो को हुनसक्छ ? भन्ने आकाशवाणी भयो । धर्मात्मा ती राजा सकुशल आफ्नो गन्तव्यतर्फ केशव भगवान्को जय मनाउँदै लम्किए । वशिष्ठ भन्नुहुन्छ- 'हे मान्धाता ! आमलकी एकादशीको जसले व्रत गर्दछ त्यो मनुष्य मरणोपरान्त विष्णुलोक पुग्दछ, यसमा कुनै सन्देह छैन ।' जय गुरुदेव !

# शुभकार्यको शुभारम्भ शुभमुहूर्तमा

वराहमिहिरले शताब्दियौँपूर्व कालगणना गरेर यो सिद्ध गरेका थिए कि प्रत्येक दिन मानिसको शुभ र अशुभ दुवै प्रकारका समय आउँछन् र कालज्ञानअनुसार शुभ समयमा कार्य गरेमा निश्चय नै कार्यमा सफलता प्राप्त हुन्छ ।यद्यपि ज्योतिषमा दिशासूल, योगिनी, चन्द्रमा आदिको उल्लेख छ र यो पनि बताइएको छ कि यी सबैलाई ध्यानमा राखेर नै शुभकार्य प्रारम्भ गर्नु पर्दछ ।महिराचार्यका अनुसार यदि हामीलाई कालज्ञान छ भने यी कुराहरूलाई ध्यानमा राख्नु आवश्यक छैन किनकि कालज्ञान आफैँमा अत्यन्त महत्त्वपूर्ण छ ।यसैले यसमा व्यतिपात, दिशासूल आदिको अशुभ प्रभाव पर्दैन ।यात्रा, विवाह, भेटघाटलगायतका कुनै पनि शुभकार्य प्रारम्भ गर्दा कालज्ञानअनुसार गरिएमा ती कार्यहरू सफल हुन्छन् भनेर मिहिराचार्य भन्दछन् ।

प्रस्तुत शुभ समयहरू (सर्वश्रेष्ठ तथा श्रेष्ठ) परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूद्वारा रचित 'ज्योतिष और काल निर्णयु नामक हिन्दी ग्रन्थमा आधारित रहेर तयार पारिएको हो ।

**२०६९ फाल्गुण ६, १३, २० र २७ गते आइतबार**

**सर्वश्रेष्ठ–** दिन ६:००–६:४८, रात्रि ६:४८–७:३६, ३:३६–४:२४

**श्रेष्ठ–** दिन ६:४८–१०:००, रात्रि ८:२४–१०:००, ४:२४–६:००

**२०६९ फाल्गुण ७, १४, २१ र २८ गते सोमबार**

**सर्वश्रेष्ठ–** रात्रि ७:३६–९:१२

**श्रेष्ठ–** दिन ६:००–७:२४, १०:४८–१:१२,३:३६–५:१२

रात्रि ९:१२–१०:००, १:१२–२:४८

**२०६९ फाल्गुण १, ८, १५, २२ र २९ गते मंगलबार**

**सर्वश्रेष्ठ–** रात्रि ७:३६–९:१२, ३:३६–४:२४

**श्रेष्ठ–** दिन ६:००–८:२४, १०:००–१२:२४, ४:३६–५:१२

रात्रि ९:१२–१०:००, १२:२४–२:००, ४:२४–६:००

**२०६९ फाल्गुण २, ९, १६, २३ र 30 गते बुधबार**

**सर्वश्रेष्ठ–** दिन ३:३६–४:२४, रात्रि ९:१२–१०:४८

**श्रेष्ठ–** दिन ७:३६–९:१२, ११:३६–११:५४, ४:२४–६:००

रात्रि ६:४८–९:१२, २:००–६:००

**२०६९ फाल्गुण ३, १०, १७ र २४ गते बिहीबार**

**सर्वश्रेष्ठ–** रात्रि ७:३६–९:१२

**श्रेष्ठ–** दिन ६:००–८:२४, १०:४८–१:१२, ४:२४–६:००

रात्रि ९:१२–१०:००, १:१२–२:४८, ४:२४–६:००

**२०६९ फाल्गुण ४, ११, १८ र २५ गते शुक्रबार**

**सर्वश्रेष्ठ–** रात्रि १:१२–३:३६

**श्रेष्ठ–** दिन ६:४८–१०:२४, ४:२४–५:१२

रात्रि ८:२४–१०:४८, ४:२४–६:००

**२०६९ फाल्गुण ५, १२, १९ र २६ गते शनिबार**

**श्रेष्ठ–** दिन १०:३६–१२:२४, ३:३६–५:१२

रात्रि ८:२४–१०:४८, २:००–३:३६, ४:२४–६:००

***नोटः** दिन भन्नाले बिहान ६:०० देखि साँझ ६:०० सम्म*
*रात्रि भन्नाले साँझ ६:०० देखि अर्को बिहान ६:०० सम्म*

*(प्रस्तुत राशिफल सूर्य सिद्धान्तमा आधारित छ । राशिफल लेखक अधिकारीज्यूको सगरमाथा टेलिभिजनमा हरेक दिन बिहान ६:०० देखि ७:०० बजेसम्म कार्यक्रम 'ग्रहफल' प्रत्यक्ष प्रशारण हुन्छ ।)*

–ज्यो. हरिओम अधिकारी
*'ज्योतिष भाष्कर'*

**मेष** (चू, चे, चो, ला, ली, लु, ले, लो, अ):
ठूला बडाको सम्पर्कले कार्य सिद्धि हुनेछ । आर्थिक लाभ प्रशस्त मिल्नेछ । आम्दानीका नयाँ स्रोतहरू खोलिनेछन् । नयाँ कार्यको थालनी गरे शुभ रहनेछ । स्वास्थ्यमा भने धन खर्च बढेर जाने देखिन्छ । जोडी अंक शुभ, जोडीबार शुभ, दक्षिण पूर्वको शुभ यात्रा, कलेजी र रातो शुभ रङ रहनेछ ।

**वृष** (ई, उ, ए, ओ, वा, वी, वु, वे, वो): अध्ययन, अध्यापन र उच्च शिक्षामा लागेका व्यक्तिलाई शुभ रहनेछ । शत्रु नाश हुनेछन् । आर्थिक लाभ प्रशस्तै प्राप्त हुनेछ । कर्म स्थानमा मान, पद र प्रतिष्ठा पनि प्राप्त हुने देखिन्छ । जोडी अंक शुभ, जोडीबार शुभ, खरानी र सेतो शुभ रङ, पूर्व पश्चिमको शुभ यात्रा रहनेछ ।

**मिथुन** (क, की, कु, ध, ङ, छ, के, को, ह):
स्वास्थ्यमा समस्या देखिनेछन् । आर्थिक हानि पनि हुन सक्ला । व्यापार व्यवसाय फस्टाउनेछ । सन्तानबाट टाढा रहनु पर्ला । नोकरीमा पदोन्नति र मान सम्मान मिल्नेछ । बिजोडी अंक शुभ, बिजोडीबार शुभ, दक्षिण पश्चिमको शुभ यात्रा, हरियो रङ शुभ रहनेछ ।

**कर्कट** (ही, हु, हे, हो, डा, डी, डु, डे, डो):
स्वास्थ्यमा समस्या देखिनेछन् । व्यापार व्यवसायबाट राम्रो आम्दानी हुनेछ । गुमेको र फसेको धन फेला पर्ने दखिन्छ । दूर देशको यात्रा फलदाई रहनेछ । जोडी अंक शुभ, जोडीबार शुभ, उत्तर पश्चिमको शुभ यात्रा, खरानी रङ शुभ रहनेछ ।

**सिंह** (मा, मि, मु, मे, मो, टा, टि, टु, टे):
पराक्रम बढ्नाले नयाँ कार्यको थालनी गर्न सक्नु हुनेछ । दाम्पत्यजीवन विवादपूर्ण रहनेछ । सामान हराउने, चोरी हुने सम्भावना देखिन्छ । जागिरमा पदोन्नति हुनेछ । बिजोडी अंक शुभ, बिजोडीबार शुभ, पूर्व पश्चिमको शुभ यात्रा, रातो, कलेजी शुभ रङ रहनेछ ।

**कन्या** (टो, पा, पी, पू, ष, ण, ठ, पे, पो)
बालीको प्रभाव बढ्नेछ । मानसिक चिन्ता र डिप्रेशन बढ्नेछ । आफन्तले पनि धोका दिनेछन् । सुन्दर वस्त्रलाभ हुनेछ । यात्रामा पनि निस्किने योग रहेको देखिन्छ । बिजोडी अंक शुभ, बिजोडीबार शुभ, उत्तर पश्चिमको यात्रा शुभ, रंगीन रङ शुभ रहनेछ ।

**तुला** (रा, रि, रु, रे, रो, ता, ति, तु, ते):
आर्थिक लेनदेनले कुटुम्बसँग विवाद पर्ला । नयाँ कार्य योजना बन्नेछन् । फसेको धन मिल्ने सम्भावना रहेकोछ । निमोनिया आदि रोगले सताउने देखिन्छ । जोडी अंक शुभ, जोडीबार शुभ, दक्षिण पश्चिमको शुभ यात्रा, खरानी रङ शुभ रहनेछ ।

**वृश्चिक** (तो, ना, नि, नु, ने, नो, या, यि, यु):
खर्चालु समय रहनेछ । भूमि अथवा घरको किनमेल हुनेछ । सन्तानबाट सुख प्राप्त हुनेछ । सामाजिक मान प्रतिष्ठा बढ्नेछ । नोकरीमा पदोन्नति मिल्ने देखिन्छ । जोडी अंक शुभ, बिजोडीबार शुभ, दक्षिण पूर्वको शुभ यात्रा, रातो र कलेजी रङ शुभ रहनेछ ।

**धनु** (ये, यो, भा, भी, भु, ध, फ, ढा, भे):
अधुरा रहेका कार्य पूरा हुनेछन् । वैदेशिक क्षेत्रबाट धनलाभ हुनेछ । पारिवारीक समस्याले सताएता पनि आम्दानी भने राम्रै रहनेछ । शुभयात्रा पनि हुने देखिन्छ । बिजोडी अंक, बिजोडीबार, उत्तर पश्चिमको यात्रा, पहेँलो रङ शुभ रहनेछ ।

**मकर** (भो, जा, जी, जु, जे, जो, ख, खि, खु, खे, गा, गि):
भय र त्रासले निद्रा नलाग्ने देखिन्छ, र पनि शत्रु नाश हुनेछन् । आम्दानी थुप्रै हुने देखिन्छ । पारिवारीक कलह र स्वास्थ्यमा समस्या देखिएला । अध्ययन राम्रै रहनेछ । बिजोडी अंक, बिजोडीबार, दक्षिण पूर्वको यात्रा, खरानी रङ शुभ रहनेछ ।

**कुम्भ** (गु, गे, गो, सा, सी, सु, से, सो, दा):
पारिवारीक समस्याको समाधान हुनेछ । पेटको रोगले सताउनेछ । आम्दानीका नयाँ स्रोत खोलिनेछन् । लामो यात्रा हुनेछ । मानसिक चिन्ता रहने देखिन्छ । बिजोडी अंक, बिजोडीबार, दक्षिण पूर्वको यात्रा, पिंक, पहेँलो रङ शुभ रहनेछ ।

**मीन** (दी, दु, थ, झ, ञ, दे, दो, च, ची):
पराक्रम वृद्धि हुनेछ, जग्गा जमिनमा विवाद बढ्नेछ, बोलीको प्रभाव राम्रो हुनेछ । यात्रा पनि शुभ रहने देखिन्छ । व्यापार बढेर जानेछ । आर्थिक लाभ रहनेछ । बिजोडी अंक, बिजोडीबार शुभ, उत्तर पूर्वको यात्रा, पिंक, पहेँलो शुभ रङ रहनेछ । *अस्तु । शुभम् ।*



## हार्दिक श्रद्धाञ्जली

जन्म
१९९२।०३।२२

(स्व. टिकादेवी कार्की)

स्वर्गारोहण
२०६९।०९।२६

**यस सिद्धाश्रम शक्ति केन्द्र नेपाल बसुन्धराका हितैषी तथा शुभचिन्तक सन्तोष (अरुण) के.सी.की हजुर आमा श्रीमती टिकादेवी कार्कीको असामयिक निधनमा हामी मर्माहत भएका छौं । यस दुःखद घडीमा शोकसन्तप्त परिवारमा धैर्य धारण गर्ने शक्ति प्राप्त होस् र मृतात्माले चीर शान्ति पाऊन् भनी परमपूज्य सद्गुरूदेवहरूको श्रीचरणकमलमा हार्दिक प्रार्थना गर्दछौं ।**

**सिद्धाश्रम शक्ति केन्द्र नेपाल**
**बसुन्धरा, काठमाडौं ।**

मद पीवत तहाँ प्रांण निरास ॥
भांगि भषंत ग्यांन ध्यांन षोवंत ।
जम दरबारी ते प्रांणी रोवंत ॥

माछा-मासुको सेवनले तामसिक भावको वृद्धि हुन्छ । प्राणीमा दयाभाव र अरूप्रतिको सद्व्यवहार अथवा सदाचार, सत्कर्तव्यको नाश हुन्छ । यस प्रकार जो प्राणी मदिराको सेवन गर्दछ, उसको प्राणशक्ति क्षीण हुन्छ, शरीर विकारग्रस्त हुन्छ । जो प्राणी गाँजा, भाङको सेवन गर्दछ, ऊ ज्ञान र ध्यान दुवैबाट वञ्चित हुन्छ । हे अवधूत ! मांस भक्षण, मदिरा, भाङ सेवनले मनुष्यको बुद्धि विकृत हुन्छ र आफ्नो पापकर्मको फलस्वरूप ऊ नरकमा पुग्दछ । यमराजको यातनाबाट पीडित भई निरन्तर रूपमा प्रायश्चित गर्दै शोकमा रोई-रोई दिन बिताउँदछ ।

**चालिबा पंथा कै सीबा कंथा ।**
**धरिबा ध्यानं कै कथिबा ग्यानं ।**
**एकाएकी सिधकै संग ।**
**बदंत गोरषनाथ पूता न होयसि मन भंग ॥**

योगीको लागि मनको एकाग्रता अति नै आवश्यक छ । मन भङ्ग नहोस् भनी कि त ॐ एकान्तमा रमाउनुपर्दछ वा एकान्त स्थानमा बसी आफ्नो शरीरलाई शोधन गर्नुपर्दछ अथवा आफ्नो इष्टदेव परब्रह्म परमात्मा परम शिवको ध्यानमा तल्लीन रहनुपर्दछ अथवा आफ्नो अनुभवबाट प्राप्त आत्मज्ञान अरूको हित, उद्धारको लागि, मार्गनिर्देशनका लागि उपदेश गर्नुपर्दछ । गुरु गोरखनाथ आदेश दिँदै भन्नुहुन्छ कि माथि वर्णन गरेका कुराहरूलाई जीवनमा अवलम्बन गर्नाले मन चञ्चल हुँदैन र

साधना सुचारु रूपले अगाडि बढ्दछ ।

**पढि देषि पंडिता ब्रह्मगियानं ।**
**मूर्बा मुकति बैकुंठा थांन ॥**
**गाडया जौल्या चौरासी मै जाई ।**
**सति सति भाषंत गोरष राइ ॥**

हे विद्वान्‌हरू हो ! शास्त्रमा वर्णन गरिएको आत्मज्ञान, परमात्मज्ञान आदिलाई अध्ययन गरी त्यसलाई जीवनमा अनुभव गर्नुपर्दछ । आत्मज्ञानको अभावमा पार्थिव शरीरबाट प्राण निक्लिएर जानाले मुक्तिको प्राप्ति वा वैकुण्ठमा निवास हुने आदि कुराहरूको कुनै महत्त्व छैन । शरीर निष्प्राण हुनाले यसलाई गाडिन्छ वा समाधिमा सुरक्षित राखिन्छ वा चितामा राखेर जलाइन्छ । जीवात्मा आफ्नो कर्मअनुसार चौरासी लाख योनिमा घुमिरहन्छ । जन्म लिने, छोड्ने चक्र चलिरहन्छ । यसैले परब्रह्मको ज्ञानस्वरूपको अनुभव गर्नुपर्दछ । अपरोक्षानुभूतिको मार्ग नै सिद्धिदायक छ ।

**आकाश तत सदासिव जांण ।**
**तिस अभिअंतरि पद निरबांण ॥**
**प्यंडे परचांरै गुरमुषि जोइ ।**
**बाहुड़ि आवागवन न होई ॥**

हाम्रो शरीरमा षट्‌चक्रको माथि सहस्रार स्थित छ । यो आकाश, शून्य गगन हो । यो नै कैलाश हो । यसमा नै परमशिव सदाशिव निवास गर्नुहुन्छ जसको साक्षात्कारबाट मूलाधारमा स्थित प्रसुप्त कुण्डलिनी शक्ति शिवसँगको सामरस्यबाट जागृत अवस्थामा मिल्नाले कैवल्यपद प्राप्त हुन्छ । यस परमतत्त्वको परिज्ञान सद्‌गुरुको मुखबाट सद्‌ज्ञान श्रवण गर्नाले हुन्छ । उहाँकै कृपाले कैवल्यपदमा स्थित भई परम निर्वाणस्वरूप सदाशिवको साक्षात्कार सुलभ हुन्छ र बारम्बार जन्म-मरणको चक्रमा आउनुपर्दैन । जीवात्मा नित्य मुक्त हुन पुग्दछ ।

# पंचागुली देवी

## –हस्तरेखा विज्ञान–

अघिल्ला अध्यायहरूमा मैले हातका रेखाहरू तथा पर्वतहरूका बारेमा विस्तारपूर्वक स्पष्ट गरेको थिएँ । तर त्यसमा पंचागुली देवीको बारेमा जानकारी स्पष्ट गर्न सकेको थिइन । यस अध्यायमा यससित सम्बन्धित संक्षिप्त जानकारी प्रस्तुत गरिरहेको छु । जसलाई यसको बारेमा विस्तारपूर्वक अध्ययन गर्नु छ, उहाँले मेरो पुस्तक 'हस्तरेखा विज्ञान और पंचागुली साधना'को अध्ययन गर्न सकिन्छ ।

पंचागुली देवीको बारेमा अनेकौं प्राचीन ग्रन्थहरूमा उल्लेख भएको पाइन्छ । तिनमा यो स्पष्ट गरिएको छ कि यदि कसैले नियमपूर्वक पंचागुली देवीको साधना गर्दछ भने चाँडै नै उनी सफल भविष्यवक्ता बन्न सक्दछ । कुनै पनि व्यक्तिको हात हेर्नासाथ त्यस व्यक्तिको भूत, वर्तमान र भविष्य उनको सामु साकार हुन जान्छ । साथै उनी अनेकौं सूक्ष्म रहस्यहरूबाट पनि राम्रोसित परिचित हुन पुग्दछ ।

यो कुरा स्पष्ट छ कि पाश्चात्य हस्तरेखा विशेषज्ञ कीरो वा चीरियो पनि पंचागुली देवीको साधना गर्दथे । कीरो भारतमा करिव ३ वर्षसम्म रहे र उनले यहाँका एक योगीबाट पंचागुली साधनाको बारेमा अध्ययन गरेका थिए । यसै साधनाले गर्दा उनी विश्वविख्यात भएका थिए । मेरो स्वयंको यो अनुभव छ कि यो साधनाबाट व्यक्तिलाई हस्तरेखाको पूर्ण र सहज ज्ञान हुन जान्छ ।

पंचागुली साधनामा शुभ मुहूर्त हुनु आवश्यक छ ।

**मासः**

यो साधना कुनै पनि महिनाबाट प्रारम्भ गर्न सकिन्छ । तर वैशाख, कार्तिक, आश्विन तथा माघ विशेष शुभ मानिन्छ ।

**तिथिः**

यो साधना शुक्ल पक्षको द्वितीया, पंचमी, सप्तमी, अष्टमी, दशमी अथवा पूर्णमासीबाट प्रारम्भ गर्न सकिन्छ ।

**वारः**

रवि, बुध, गुरु तथा शुक्रबार यो प्रारम्भ गर्न श्रेष्ठ मानिएको छ ।

**नक्षत्रः**

कृतिका, रोहिणी, पुनर्वसु, हस्त, तीनै उत्तरा, अनुराधा तथा श्रवण नक्षत्र विशेष अनुकूल मानिन्छ ।

**लग्नः**

स्थिर लग्न, वृष, सिंह, वृश्चिक, कुम्भ ।

**स्थानः**

तीर्थभूमि, गंगा यमुना संगम, नदीको तट,

पर्वत गुफाहरू तथा स्कांध देव मन्दिर यसका लागि शुभ छन् । तर यदि यी स्थान सुलभ छैन भने घरको एकान्त कोठाको उपयोग गर्न सकिन्छ ।

**पंचागुली यन्त्र:**

कुनै पनि तन्त्र साधनामा आवश्यकता पर्दा यन्त्रको उपयोग गर्नु आवश्यक हुन्छ। पंचागुली साधना सिद्ध गर्नका लागि प्राण-प्रतिष्ठायुक्त तन्त्र सिद्ध पंचागुली यन्त्र तथा पंचागुली देवीको चित्र अति धेरै आवश्यक हुन्छ। केन्द्रमा सम्पर्क स्थापित गरेर आवश्यक यन्त्र तथा चित्र पठाउने व्यवस्था हुन सक्नेछ ।

**पूजन सामग्री:**

| | | |
|---|---|---|
| कुंकुम | नरिवल (जटायुक्त) | दीयो |
| अबीर | चामल | दही |
| सिम्रिक(गुलाल) | बदाम | सख्खर |
| मौडी | ओखर | पान |
| सुपारी | काजू | भोजपत्र |
| केशर | किसमिस | पिपलको पात |
| बतासा | मिश्री | काँचो दूध |
| दूग्ध प्रसाद | अगरबत्ती | घिउ |
| कपूर | ल्वांग | फूल |
| अलैंची | कालो मरिच | फूलको माला |
| यज्ञोपवीत | मह | गंगा जल |
| फल | इत्र | कुवाको शुद्ध जल । |

यस साधनामा केही कुराहरू महत्त्वपूर्ण छन् जुन निम्नलिखित छन् :

१. स्त्री संसर्ग तथा स्त्री चर्चा साधनाकालमा त्याज्य छ ।

२. क्षौरकर्म गर्न हुँदैन ।

३. संध्या गायत्री स्मरण निश्चित होस् ।

४. नग्नावस्थामा, बिना स्नान, अपवित्र हात र शिरमा कपडा राखेर पनि जप गर्न निषिद्ध छ ।

५. जपको बेला माला पूरा नभइकन वार्तालाप गर्न हुँदैन ।

६. हाछिउँ आउँदा, अपान वायु आउँदा हात धुनुपर्दछ तथा कानलाई जलले स्पर्श गर्नुपर्दछ ।

७. आलस्य, तन्किनु, हाछिउँ, निद्रा, थुक्नु, डराउनु, अपवित्र वस्त्र, वार्तालाप, क्रोध आदि जपकालमा वर्जित छ ।

८. पहिलो दिन जति मात्रामा जप गरिएको छ, सधैं उत्तिकै सङ्ख्यामा जप गर्नु पर्दछ । यसलाई घटाउनु बढाउनु उचित हुँदैन ।

९. जपकालमा शौच गएपछि पुन: स्नान गरेर जप गर्नुपर्दछ ।

**जपकालको नियम:**

जपकालमा निम्न नियमहरूको पालना गर्नुपर्दछ:

१. भूमि शयन २. ब्रह्मचर्य ३. नित्य स्नान ४. मौन ५. नित्य दान ६. गुरु सेवा ७. पापकर्म परित्याग ८. नित्य पूजा ९. देवतार्चन १०. इष्टदेव व गुरुमा श्रद्धा ११. जप निष्ठा १२. पवित्रता ।

## फाल्गुण महिनामा पर्ने चाडपर्वहरू

| | |
|---|---|
| फाल्गुण १ गते | **तान्त्रोक्त वटुक भैरव हवन,** |
| | **तान्त्रोक्त गणपति हवन,** |
| | **तान्त्रोक्त चण्डेश्वरी हवन** |
| फाल्गुण २ गते | **तान्त्रोक्त महालक्ष्मी हवन** |
| | **तान्त्रोक्त विन्ध्यवासिनी हवन** |
| फाल्गुण ३ गते | **तान्त्रोक्त बगलामुखी हवन,** |
| | **तान्त्रोक्त वेदव्यास हवन,** |
| फाल्गुण ४ गते | श्रीपञ्चमी |
| फाल्गुण ५ गते | **तान्त्रोक्त बाघभैरव हवन** |
| फाल्गुण ७ गते | **श्री शिवगोरक्ष हवन,** |
| | गोरखकाली पूजा |
| फाल्गुण १० गते | **दिव्य गुरु महोत्सव,** |
| | भीमा एकादशी |
| फाल्गुण १४ गते | **गोरक्ष प्रकट तिथि,** |
| | श्रीस्वस्थानी व्रत समाप्त |
| फाल्गुण २२ गते | गोरखकाली पूजा |
| फाल्गुण २५ गते | विजया एकादशी |
| फाल्गुण २७ गते | महाशिवरात्रि |
| फाल्गुण २९ गते | ग्याल्पो ल्होसार |

**प्रत्येक बृहस्पतिबार बिहान १०:00 बजे-गुरू पूजन**
**प्रत्येक दिन साँझ ५:00 बजे-आरती**

## कृतिहरूको अध्ययन गरौं

परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूले विभिन्न विषयमा पाँच सयभन्दा बढी कृतिको रचना गर्नुभएको छ । तन्त्र, मन्त्र, यन्त्र, ज्योतिष, आयुर्वेद, हस्तरेखा, योग, ध्यान, साधनादिमा केन्द्रित उहाँका कृतिहरु एउटा प्रामाणिक दस्तावेजका रूपमा रहिरहेको छ । यी विषयहरुमा जानकारी प्राप्त गर्न चाहनेहरुका लागि यी कृतिहरु सदा धरोहरका रुपमा रहिरहने कुरामा कुनै संदेह रहन्न । उहाँका कृतिहरुको अध्ययन गरी यी विषयहरुमा अत्यधिक जानकारी हासिल गरौं ।

# सिद्धाश्रम शक्ति केन्द्रका सम्पर्क कार्यालयहरू

- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोनः ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोनः ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट,
  फोनः ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोनः ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोनः ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोनः२२२००२१
- **गोरखा**, बसपार्क, फोनः ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोनः ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोनः ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि
  फोनः ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोनः ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोनः ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार
  फोनः ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोनः ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, बिन्ध्यवासिनी
- **काठमाडौँ**, पुरानो बानेश्वर,
  फोनः ०१-४४६४५४७
- **काठमाडौँ**, सिमलटार
- **काठमाडौँ**, तीनकुने (मुनिभैरव)
  फोनः ०१-६९१२८२७
- **ललितपुर**, गोदावरी

# स्वस्थानी व्रत

(साँखुस्थित श्रीस्वस्थानी मन्दिर)

सुवर्णवर्णदीप्ताभां त्रिनेत्रां कमलासनाम् ।
सिंहासनासमासीनां सर्वालंकारभूषिताम् ॥
नीलोत्पलधरां वामे दक्षिणे वरदां शुभाम् ।
खड्गचर्मधरां चोर्ध्वं वामदक्षिणयोः क्रमात् ॥
चतुर्भुजां च मां तत्र पूजयेद् वृषकेतनम् ।
एवं ध्यात्वा महादेवीं स्वस्थानीं जगदीश्वरम् ॥

*पीतवर्ण सुवर्णभन्दा पनि दिव्य भएकी, तीन आँखा भएकी कमलको फूलझैं उज्यालो मुख भएकी, सिंहासनमा बसेकी, नाना अलङ्कार लाएकी, खड्ग, चर्म नीलोत्पल लिएकी, चार हात भएकी, यस्ती स्वस्थानी परमेश्वरीलाई सम्झी मेरो पनि पूजा गर्नु भनी श्रीमहादेवबाट आज्ञा भएको छ ।*

श्रीस्वस्थानी परमेश्वरीको व्रतकथा अहिले घर घरमा वाचन भइरहेको छ । नेपाली परम्परामा श्रीस्वस्थानी व्रतकथाले विशेष महत्त्व राख्दछ । एक महिनासम्म चल्ने श्रीस्वस्थानी व्रतका लागि ऐतिहासिक सहर साँखुमा मानिसहरूको घुइँचो लाग्दछ । भक्तहरू यहाँ एक महिनासम्म व्रत बस्दछन् । यहाँ स्थित शालीनदीमा प्रत्येक वर्ष मिलापुह्नी (पौषशुक्ल पूर्णिमा) देखि सि: पुह्नी (माघशुक्ल पूर्णिमा) सम्म ठूलो मेला लाग्दछ । श्रीस्वस्थानी ग्रन्थका अनुसार शालीनदीको तीरमा अप्सराहरू आई व्रत बस्छन् । यो प्रचलन परापूर्वकालदेखिको हो । बौद्ध ग्रन्थमा उल्लेख भए अनुसार देवगुरु वृहस्पतिको सल्लाहअनुसार यहाँ विष्णु भगवान् आएर व्रत बस्नुभएको थियो । भगवान् विष्णुले देवी खुसी भई मायासुर दैत्यलाई पराजित गर्ने वरदान दिनुभएको प्रसंग पाइन्छ ।

# आयुर्वेद भनेको के

हामीले अघिल्लो अङ्कमा पञ्चकर्मको प्रमुख कर्महरुको एक महत्त्वपूर्ण कर्म वमन (Emesis) को सामान्य जानकारी हासिल गर्‍यौं । अब यसपालिको अङ्कमा वमन विधि-विधानको बारेमा जानकारी हासिल गरौं ।

आयुर्वेदको सुन्दरतम पक्ष यो छ कि कुनै पनि कार्य गर्नुभन्दा पहिले शुभ-मंगल एवं सद्विचारको संचारण गरिन्छ । त्यस्तै वमन गर्नुभन्दा पहिले पनि स्नेहन, स्वेदन आदि पूर्वकर्म त गर्नु आवश्यक नै भयो । यसको साथसाथै आभ्यन्तर स्नेहन अर्थात् घृतपान पनि गराउनु आवश्यक हुन्छ । वमन प्रक्रियामा शरीरमा बढेको कफ दोषलाई उत्क्लेश गरेर शरीरबाट निकालिन्छ । फोक्सोको Congestion, Bronchites श्वास, कास, दम (Asthma) मा यो अत्यन्त लाभदायक छ । साथै वमन प्रक्रिया शरीरमा पित्त प्रकोपको कारण हुने विभिन्न disorder हरुमा मा पनि लाभदायक छ ।

- **पूर्वकर्म** : विरामीका Blood Suger, Lipid Profile, LFT, Blood Urea, CBC, ESR, Stool Re, Re Urine आदि परीक्षण ।

**स्नेहन स्वेदन** : वमन गर्नुभन्दा पहिले स्नेहन स्वेदन अनिवार्य रुपमा गर्नुपर्छ । ध्यान दिनुपर्ने कुरा यो हो कि वमन गर्दा, आभ्यन्तर र बाह्य स्नेहन दुवै गर्नुपर्ने हुन्छ । आभ्यान्तर स्नेहलाई घृतपान पनि भनिन्छ । घृतपान भन्नाले निख्लो घिउ खुवाउने भनेर बुझिदैन । विभिन्न औषधीय क्वाथलाई स्नेह द्रव्य घृत, तेल आदिमा पकाएर विरामीलाई खाली पेटमा खुवाइन्छ । यस कालमा विरामीले आहार-विहारसम्बन्धी पथ-परहेजमा बस्नुपर्ने हुन्छ । साथै बाह्य स्नेहन पनि गर्नुपर्ने हुन्छ । बाह्य स्नेहनको साथमा स्वेदन गरेपछि मात्र वमन पूर्वको पूर्वकर्म पूरा हन्छ । आभ्यन्तर स्नेहन ३-७ दिनसम्म गर्नुपर्ने हुन्छ र यो रोगअनुसार अलग-अलग प्रकारको हुन्छ । सम्यक स्निग्ध लक्षण भएपछि मात्र स्वेदन गर्नुपर्ने र आभ्यन्तर स्नेहन गरेको १ दिनपछि मात्र वमन गराउनु पर्ने हुन्छ । आचार्य चरकले वमन गर्नुभन्दा पहिले दुई वा दिन दिनै बाह्य स्नेहन एवं स्वेदन गर्नुपर्ने बताउनु भएको छ । जुन दिन स्नेहनपान समाप्त हुन्छ र त्यसको भोलिपल्ट Rest दिनमा र वमन गराउँदाको दिन बाह्य स्नेहन एवं स्वेदन गर्नुपर्ने हुन्छ ।

स्नेहपान, अभ्यङ्ग वाष्पस्वेदबाट दोषहरुको क्लेदन, द्रवीकरण तथा कोष्ठाभिगमन हुन्छ जसको कारण वमन सुखपूर्वक निक्लिन्छ ।

**मानसोपचार** : विरामीलाई प्रसन्न राख्नु अत्यन्त आवश्यक हुन्छ । विरामीलाई वमनमा के-के हुन्छ, कस्तो खानपिन अर्थात् आहार-विहार गर्ने हो, यसको बारेमा राम्रोसँग जानकारी दिनुपर्ने हुन्छ । विरामीको मनमा वमन गर्ने समयमा कुनै पनि भय, चिन्ता, लज्जा हुनु हुँदैन, मन प्रसन्न हुनुपर्छ, साथै विरामी आनन्दित मुद्रामा हुनुपर्छ । त्यसैले आयुर्वेदको उत्पत्तिकालबाट नै विरामीलाई निम्न मानसोपचार गर्नुपर्ने विधान छ–

- शिर र शरीर राम्रोसँग स्नान गर्ने ।
- शरीरमा सुगन्धित तेल लगाउने ।
- सुगन्धित फूलको माला लगाउने ।
- राम्रो, सफा लुगा लगाउने ।
- देवता, अग्नि, ब्राह्मण, गुरु, वैद्यको सत्कार गर्ने ।
- प्रार्थना, स्वस्तिवाचन, गुरुमन्त्र तथा मंगल कामना गर्ने ।

## प्रधान कर्म :

यसअन्तर्गत विरामीलाई वमनौषधी पिलाउने तथा वमनको वेगपूर्व हुनेसम्म जुन जुन कार्य गरिन्छ, ती सबै प्रधान कर्ममा पर्छ ।

१) **वमनौषधी खुलाउने** : विरामीलाई विशेष तरिकाबाट निर्मित वमनौषधी आकण्ठ (पेटभरि) अर्थात् घाँटीसम्म आउने गरी खुवाउने । विरामीलाई औषधी खुवाउँदा मतमताउने हुने हुँदा बीच-बीचमा वमन द्रव क्वाथ एवं वमन कल्क वमनौषधीसँग खुवाउने

# यति मात्रै हो त ?

गर्नुपर्छ । विरामीलाई सुखपूर्वक कुर्चीमा बसाएर वमनौषधी खुवाएपछि विरामीलाई चिकित्सकले विशेष हेरचार गर्नुपर्ने हुन्छ। विरामीको स्वेद पार्दुभाव, लोमहर्ष, आध्मान, लालास्राव, हल्लास आदि लक्षण हेर्नुपर्ने हुन्छ। यो प्रक्रियामा परिचारक वा चिकित्सकले विरामीको हात, खुट्टा, वक्ष, पृष्ठ, पार्श्व आदिमा हल्का मालिस गर्ने ।

जब विरामीलाई हल्का वाक्वाक् हुन थाल्छ तब विरामीलाई हल्का निहुरिन (Bent) लगाएर वमनको वेग आएपछि वमन (Vomitus) एउटा भाँडोमा Collect गर्न लगाउनपर्छ । विरामीलाई कति वेग आयो भन्ने निरीक्षण गर्नुपर्छ। साथै वमनको रङ आदि पनि निरीक्षण गर्नुपर्ने हुन्छ । वमन प्रक्रिया सम्यग भयो कि भएन भनेर लैगिक (Based on Signs and Symptoms), वेगीकी (Based on Episode वा Vomiting) मानकी (Based on Quantity) र अन्तकी (Based on Last Content वा Vomitus) को आधारमा गर्न सकिन्छ। सम्यग वमन लक्षण प्राप्त भएपछि विरामीलाई पश्चात् कर्म गर्नुपर्छ ।

**पश्चात् कर्म** : वमन वेगबाट निवृत्त भएपछि विरामीलाई प्राकृत भोजनसम्म लैजान जुन उपक्रम गरिन्छ, त्यसलाई नै पश्चात्कर्म भनिन्छ। यसअन्तर्गत निम्न विषय समावेश हुन्छ–

१) **धुम्रपान** : वमन वेग पूरा भएपछि वमनको, प्रवर, मध्य, अवर निर्धारण गरेपछि विरामीलाई लालास्राव, उद्गार आदि हुन सक्ने हुनाले निरीक्षण गरी स्नैहिक, वैरेचनिक, शमन आदि प्रकारका धुम्रपान विरामीको आवश्यकताअनुसार गराउनु पर्ने हुन्छ । यसो गर्नाले वमनोसृष्ट कफले गर्दा गलामा उत्पन्न भएको स्निग्धता, पैच्छिल्य तथा उपलेपता कम हुन्छ तथा कण्ठ, नासा, स्रोतस शुद्ध हुन्छ ।

२) **विरामीले परिहार्य गर्नुपर्ने** : धुम्रपानपछि जलले मुख प्रक्षालन गरेपछि तेज हावा नआउने ठाउँमा आराम गर्नुपर्छ । वमनपछि गर्नुपर्ने सम्पूर्ण पथ परहेजमा रहनुपर्ने हुन्छ। साथसाथै धेरै नखाने रीस, क्रोध नगर्ने, मोटर, गाडी, साइकल वेग धारण नचढ्ने गर्नुपर्छ ।

३) **संसर्जन कर्म** : वमन गरेपछि विरामीले एकदम प्राकृत भोजन गर्नुपर्ने हुन्छ किनकि संशोधनको कारण अग्नि मन्द हुन्छ । त्यसैले अग्निलाई धेरै कार्यभार दिने भोजन ग्रहण गरेमा पचाउन सक्दैन । त्यसैले पेय आदि क्रमसँगै लघु भोजन गर्दागर्दै गुरु भोजन दिनुपर्ने हुन्छ। यही लघु र हलुको भोजनसँगै गुरु भोजन दिने प्रक्रिया जसबाट अग्नि दिप्त हुँदै जान्छ, यसलाई नै संसर्जन प्रक्रिया भनिन्छ ।

यसरी यी आदि आहार-विहारको राम्रोसँग व्याख्या गरेर १-२ घण्टाको Rest पछि विरामीलाई घर पठाइन्छ ।

त्यसैले जसरी हामीले दिनदिनै आफ्नो मुख, दाँत सफा गर्न मञ्जन गर्छौं, त्यसरी नै रोगी मानिसको लागि मात्र आवश्यक नभएर स्वस्थ मानिसले वमन गरेर आफ्नो आन्तरिक शुद्धिकरण गर्न सकिन्छ । यसो गर्नाले स्वस्थ रहनुको साथै शरीरको ओज-तेज पनि बढ्छ, छुट्टै स्फूर्ति रहन्छ । त्यसैले विचार गर्ने हो कि वमन गरेर ? जय गुरुदेव !

# विशेष आधारभूत तालिम तथा प्रशिक्षण कार्यक्रम सम्पन्न

परमपूज्य सद्‌गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले संचालन गर्दै आइरहेको कार्यकर्ता तालिम तथा प्रशिक्षण कार्यक्रम 'विशेष आधारभूत तालिम तथा प्रशिक्षण कार्यक्रम'सँगै अघि बढेको छ ।

गत माघ १६ गते सम्पन्न कार्यक्रम गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमका विद्यार्थीहरू र स्टाफहरूका लागि सम्पन्न भएको थियो । उक्त तालिम कार्यक्रममा विद्याश्रमका विद्यार्थीहरू, teaching एवं non-teaching स्टाफहरूले भाग लिनु भएको थियो ।

बिहान १०:०० बजे शुरु भएको उक्त कार्यक्रम स्तुति वन्दना, आह्वान भजनबाट शुरु भई स्वागत भजन, नृत्य, स्वागत मन्तव्य हुँदै अघि बढेको थियो । कार्यकर्ता तालिम तथा प्रशिक्षण कार्यक्रम उपविभागका उपसंयोजक तथा गुरुसेवा दलका सदस्य साधक ध्रुव विष्टले कार्यक्रममा स्वागत मन्तव्य दिनुभएको थियो ।

उक्त कार्यक्रममा कार्यकर्ता तालिम र यसको आवश्यकता, कार्यकर्ताको वर्गीकरण, सिद्धाश्रम शक्ति केन्द्र र गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको परिचय तथा मिसन, गुरुकार्य आदि सम्बन्धी प्रशिक्षण प्रदान गरिएको थियो ।

कार्यक्रममा प्रशिक्षार्थीहरूलाई संस्थागत रूपमा संकल्प गराइएको थियो भने संकल्पगानमा प्रशिक्षार्थी साधकसाधिकाहरूलाई पुष्पवर्षाले स्वागत गरिएको थियो । यस क्रममा प्रशिक्षार्थी कार्यकर्ताहरूको जोश, जाँगर र उत्साहका साथै गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमका विद्यार्थीहरू छेकु तामाङ, सपना आले मगर र विद्याश्रमका पूर्व विद्यार्थी गोनिका विष्टको नृत्य प्रस्तुतिले पनि कार्यक्रममा थप रौनकता प्रदान भएको थियो । कार्यक्रमको पूजन कार्यक्रममा विष्णुदत्त पाण्डे, अनिल पौडेल र कर्णबहादुर गुरुङ हुनुहुन्थ्यो ।

तालिम कार्यक्रममा सावरपन्थी सदस्य साधक रामजी अर्याल, सावरमातृका सदस्य साधिका विन्देश्वरी बराल, गुरुसेवा दलकी सदस्यहरू शकुन्तला तिमिल्सिना, हरि भट्टराई, देवेन्द्र विक्रम, कैलाश सुब्बा, भोजराज रेग्मीले प्रशिक्षण प्रदान गर्नुभएको थियो ।

## दिव्य गुरू महोत्सव

परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) यस धर्तीमा अवतरित हुनु भएको अंग्रेजी महिनाको २१ तारिखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउने क्रममा गत माघ ८ गते (Janaury 21, 2013) सिद्धाश्रम शक्ति केन्द्रले बसुन्धरास्थित आश्रममा उक्त कार्यक्रम सम्पन्न गऱ्यो । बिहान १०:१५ मा शुभारम्भ भएको उक्त कार्यक्रममा निखिल स्तवन, गोरक्ष स्तवनको सामुहिक पाठ, गुरु पादुका पूजन, गुरुमन्त्र जप, हवन, आवाहन भजन, आरतीका क्रमहरू सम्पन्न भएका थिए ।

कार्यक्रममा सावरपन्थी सदस्य तथा संयोजक साधक रामजी अर्यालले हालै सम्पन्न तीर्थयात्राको प्रसंग सुनाउनुका साथै अन्य समसामयिक विषयमा बोल्नुभएको थियो । कार्यक्रममा पूजन गर्ने सौभाग्य पाउनुभएको थियो ।

## गोरक्ष प्रकट तिथि

परमपूज्य सद्गुरुदेवहरूको कृपा, अनुकम्पास्वरूप सिद्धाश्रम शक्ति केन्द्र नेपालले गोरक्ष प्रकट दिवसलाई विशेष रूपमा मनाएको छ । सिद्धाश्रम शक्ति केन्द्रले गत माघ १४ गते गोरक्ष पूर्णिमा अर्थात् गोरक्ष प्रकट तिथिलाई निखिल स्तवन, गोरक्ष स्तवन, नवनाथ स्तोत्र, नामसङ्कीर्तन, गुरु पादुका पूजन, मन्त्रजपका साथ सम्पन्न गऱ्यो । स्मरण रहोस्, राष्ट्रदेव, परमाराध्य भगवान् शिवका प्रमुख अवतार करुणावतार श्री श्री महायोगी गुरु गोरक्षनाथको प्रकट तिथिले आफैमा ठूलो महत्त्व बोकेको छ । कार्यक्रममा पूजन गर्ने सौभाग्य चन्द्रकला प्रसाइँ ओझा दम्पत्तिले पाउनु भएको थियो ।

## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रबाट हरेक महिना सम्पन्न हुँदै आइरहेको मासिक कार्यक्रमअन्तर्गत हवन कार्यक्रमहरू गत महिना निम्नानुसार सम्पन्न भए–

माघ १ गते सोमबार– श्री शिव गोरक्ष हवन, गोरखनाथ मन्दिर, पशुपति, मृगस्थली, बिहान ८:००-९:०० बजे । माघ २ गते मंगलबार– तान्त्रोक्त वटुक भैरव हवन, वटुक भैरव मन्दिर, लगनखेल, बिहान ७:००-८:०० बजे । माघ ३ गते बुधबार– तान्त्रोक्त महालक्ष्मी हवन, महालक्ष्मी मन्दिर, लगनखेल, बिहान ८:००-९:०० बजे । माघ ४ गते बिहीबार– तान्त्रोक्त बगलामुखी हवन, बगलामुखी मन्दिर, पाटन, बिहान ८:००-९:०० बजे ।

त्यस्तै मासिक हवनकै क्रममा माघ ३ गते बुधबार– तान्त्रोक्त विन्ध्यवासिनी हवन, विन्ध्यवासिनी मन्दिर, पोखरा, कास्की, बिहान ८:००-९:०० बजे । माघ ४ गते बिहीबार– तान्त्रोक्त वेदव्यास हवन, वेदव्यास गुफा, तनहुँ, बिहान ८:००-९:०० बजे । माघ २ गते मंगलबार– तान्त्रोक्त गणपति हवन, सूर्यविनायक, भक्तपुर, बिहान ७:००-८:०० बजे, तान्त्रोक्त चण्डेश्वरी हवन, चण्डेश्वरी मन्दिर, काभ्रे, बिहान ७:००-८:०० बजे । माघ ६ गते शनिबार– तान्त्रोक्त बाघ भैरव हवन, बाघ भैरव मन्दिर, कीर्तिपुर, समय बिहान ८:००-९:०० बजे ।-

# गोनिज्योदि विद्याश्रमका लागि आयोजित विशेष आधारभूत तालिम तथा प्रशिक्षण कार्यक्रम (१-८)

१

२

३

४

५

६

७

८